Rabin shrestha,
Kathmandu

# नेपालको राष्ट्रिय भाषिक नीति
## तथा
# मातृभाषाको प्रयोग-विस्तार

(गोष्ठी प्रतिवेदन)




आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान

# नेपालको राष्ट्रिय भाषा नीति
## तथा
# मातृभाषाको प्रयोग-विस्तार


सल्लाहकार

चन्द्रबहादुर गुरुङ (उपाध्यक्ष)

गोविन्दलाल माझी (सदस्य-सचिव)

टसी स्याङ्मो गुरुङ्सेनी (कार्यकारिणी सदस्य)

ज्ञानेन्द्र पुन (कार्यकारिणी सदस्य)

सम्पादक

डा. तारामणि राई

सम्पादन सहयोगी

सरीना गुरुङ

विमला गुरुङ

प्रतिवेदक

गणेश राई



प्रकाशक

आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान

लगनखेल, ललितपुर

कृति : **नेपालको राष्ट्रिय भाषा नीति तथा मातृभाषाको प्रयोग-विस्तार**

सम्पादक : डा. तारामणि राई, सरीना गुरूङ र विमला गुरूङ

प्रकाशक : नेपाल सरकार, आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान
लगनखेल, ललितपुर

प्रकाशन मिति : वि.स. २०७४ (सन् २०१७)

प्रकाशन प्रति : ३००

संस्करण : प्रथम

कम्प्युटर डिजाइन : आयुष्मान शाक्य

मुद्रण : क्लासिक प्रिन्टिङ सर्भिस, अनामनगर, काठमाडौं
फोन नं. ०१-४२२४८१०

ISBN : 978-9937-0-2801-1

नेपाल सरकार
आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान
लगनखेल, ललितपुर
फोन नं : ०१-५५५३१७५, Web: www.nfdin.gov.np

प.सं.
च.नं.

# मन्तव्य

नेपाल विविधताले भरिएको देश हो । यहाँ विभिन्न जात-जाति तथा भाषा-भाषीको सङ्गमस्थल रहेको छ । यी विविधताहरूले नै एकल जातिको मात्र नभई मुलुकको बहुल परिचय दिन महत्वपूर्ण योगदान पुऱ्याएका छन् ।

देशको अमूल्य निधिको रूपमा रहेका यी धरोहरहरूको संरक्षण, संवर्द्धन र प्रवर्द्धन गर्नु राज्यको दायित्व हो । सबै जात र जाति तथा समुदायको भाषा-संस्कृतिको विकास भएमा मात्र देश बहुभाषा-साहित्यको लागि साझा फूलबारी बन्न सक्दछ । यस्तो विद्यमान परिस्थितिमा आन्तरिकमात्र नभई विश्वव्यापीकरणको बढ्दो प्रभावको कारणले कतिपय भाषा तथा संस्कृतिहरू जीवन र मरणको दोसाँधमा पुगिरहेका छन् । यसप्रति प्रतिष्ठान सचेत हुँदै यस क्षेत्रको विकास तथा उत्थानको निम्ति सहजीकरण र अभिमुखीकरण गर्ने कार्य गरिरहेको छ ।

प्रतिष्ठानले गर्ने विभिन्न कार्यहरूमध्ये आदिवासी जनजातिका विषयमा लेखिएका ऐतिहासिक महत्वका पाण्डुलिपिहरूको प्रकाशन पनि हो । यस कार्यले लेखकहरूलाई प्रोत्साहन मिल्ने देखिन्छ भने अर्कोतिर यो अभिलेखका रूपमा पनि रहन्छ । यसले आदिवासीहरूको ज्ञानलाई सुरक्षित राख्नमा ठूलो मद्दत पुग्ने देखिन्छ । एक्काइसौं शताब्दीको द्रुतवेगी ज्ञानप्रवाहलाई आत्मसात् गर्दै प्राज्ञिक उपलब्धीहरूलाई देशभित्र र देशबाहिर पुऱ्याउनका लागि पनि प्रतिष्ठान सजग छ ।

यस पुस्तकका सम्पादक डा. तारामणि राई, सरीना गुरुङ र विमला गुरुङज्यूहरूले **नेपालको राष्ट्रिय भाषा नीति तथा मातृभाषाको प्रयोग-विस्तार** नामक कृति सम्पादन गर्नु भई दस्तावेज तयार गर्नुभएकोमा बधाई दिँदै उहाँको उतरोत्तर प्रगतिको कामना गर्दछु ।

**चन्द्र बहादुर गुरुङ**
**उपाध्यक्ष**
**आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान**

# सम्पादकीय

नेपाल भाषिक, सांस्कृतिक एवम् जातीय विविधता भएको मुलुक हो । विविधता नै नेपालको वैशिष्ठयता पनि हो । यतिखेर नेपाल नयाँ संविधानले निर्दिष्ट गरेअनुरूप संघीय प्रणाली क्रियान्वयनको क्रममा छ । यसै सन्दर्भमा नेपालको भाषिक नीतिको बारेमा संवैधानिक व्यवस्था के रहेको छ ? नेपालमा बोलिने १२३ वटा मातृभाषाहरूको समग्र संरक्षण संवर्धन र विकासका लागि के कस्ता किसिमका भषिक नीतिहरू अपनाउनु आवश्यक छ ? नेपालमा बोलिने मातृभाषाहरूको प्रयोग र विस्तार कुन रूपमा भएको छ ? भन्ने जिज्ञासकै वरिपरि रहेर **नेपालको राष्ट्रिय भाषिक नीति र मातृभाषाको प्रयोग-विस्तार** शीर्षकमा २०७३ साल साउन २२ गते आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानको आयोजनामा एक दिवसीय गोष्ठी सम्पन्न भएको थियो । उक्त गोष्ठीमा कार्यपत्रहरूमार्फत् व्यक्त विचार, टिप्पणीकर्ताहरूको टिप्पणी एवम् सहभागीहरूबाट प्राप्त राय-सुझावलाई अभिलेखका रूपमा राख्ने उद्देश्यले नै यस कृतिले यो रूपमा पुस्तकको स्वरूप ग्रहण गरेको हो ।

हाम्रो आग्रहलाई सहर्ष स्वीकार गरी कार्यपत्र तयार गर्नुहुने त्रिभुवन विश्वविद्यालय भाषाविज्ञान केन्द्रीय विभागका विभागीय प्रमुख प्रा. डा. दानराज रेग्मी, भाषाविद् एवम् भाषिक अभियान्ता श्री अमृत योन्जन तामाङ, सानोठिमी भक्तपुर बहुमुखी क्याम्पसका उपप्राध्यापक प्राज्ञ अमर तुम्याहाङप्रति हार्दिक आभार ब्यक्त गर्न चाहान्छौं ।

त्यसैगरी कार्यपत्रमाथि टिप्पणी गर्नुहुने प्रा. डा. माधवप्रसाद पोखरेल, डा. बलराम प्रसाईं र अधिबक्ता शंकर लिम्बूप्रति पनि कृतज्ञाता जाहेर गर्दछौं । दोस्रो सत्रलाई अध्यक्षता गरिदिनु हुने आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानका पूर्व सदस्यसचिव श्री लोकबहादुर थापाज्यूलाई पनि विशेष धन्यवाद दिन चाहान्छौं । त्यसैगरी न्यापोटर्रको भूमिका निर्वाह गर्नुहुने कान्तिपुरकर्मी श्री गणेश वाम्बुले राईज्यूको योगदानलाई पनि स्मरण नगरिरहन सक्दैनौं ।

प्रमुख अतिथिको रूपमा सारगर्भीत मन्तव्य प्रस्तुत गर्नुहुने संघीय मामिला तथा स्थानीय विकास मन्त्रालयका माननीय राज्यमन्त्री श्री कुन्ती कुमारी शाही, विशेष

अतिथिको रूपमा मन्तव्य व्यक्त गर्नुहुने नेपाल प्रज्ञा प्रतिष्ठान मातृभाषा विभागका प्रमुख एवम् प्राज्ञ श्री श्रवण मुकारूङज्यू, भाषाविज्ञान समाज नेपालका अध्यक्ष श्री कमल पौडेल, किरात राई प्रज्ञा परिषद्का कुलपति श्री जयकुमार राईज्यूप्रति पनि हामी आभारि छौं ।

उद्घाटन सत्रको अध्यक्षता गरिदिनु हुने प्रतिष्ठानका उपाध्यक्ष श्री चन्द्रबहादुर गुरूङ एवम् स्वागत मन्तव्य व्यक्त गर्नुहुने सदस्यसचिव श्री गोविन्दलाल माभीप्रति हामी हार्दिक आभार ब्यक्त गर्न चाहान्छौ । उक्त एक दिवसीय गोष्ठी सम्पन्न गर्नका निम्ति हरतरहले सहयोग गर्नुहुने प्रतिष्ठानका कर्मचारी वर्गहरूलगायत विभिन्न संघ संस्थाबाट सहभागी भई रचनात्मक सुझाव दिनुहुने सवैमा धन्यवाद दिँदै यावत् त्रुटिहरूको वावजुद पनि आम सरोकारवालाहरूमा यो सम्पादित पुस्तक चासोको विषय बन्न गए अर्को संस्करणमा बढी परिस्कृत तुल्याउन समेत प्रयास गर्ने नै छौं ।

अन्तमा लेखमार्फत् ब्यक्त विचार नितान्त लेखकका निजी विचार हुन्, संस्थागत धारणा होइनन् । डिस्कोर्सका रूपमा मात्र यी विचारलाई प्रकाशनका रूपमा ल्याएका हौं । निकट भविष्यमै नेपालको संविधानप्रदत्त भाषा आयोगले भाषिक नीति निर्माण गर्न गइरहेकाले यो पुस्तक सहयोगीसिद्ध हुन सक्ला कि भन्ने हामीले विश्वास लिएका छौं भने भाषामा चासो राख्नुहुने भाषा अभियान्ता एवम् अध्यताहरूलाई समेत सन्दर्भसामग्री हुन सक्ला कि भन्ने हाम्रो ठहर रहेको छ ।

**सम्पादक मण्डल**

# विषयसूची

# संविधानमा भाषा, उपलब्धि र दायित्व

• अमृत योन्जन-तामाङ

संविधान देशको मूल कानुन हो । यसैको आधारमा ऐन, कानुन, नियम र निर्देशिकाको निर्माण हुन्छ । देशमा बसोबास गर्ने सबै नागरिकको हकअधिकारको मुख्य स्रोत पनि संविधान नै हो । संविधान प्रायः लिखित हुन्छ तर बेलायत भने अलिखित संविधानबाटै चलेको छ । २००३ भन्दा अगाडि नेपालमा लेख्य संविधान थिएन । संवैधानिक इतिहासमा पहिलो पल्ट २००४ मा संविधान बन्यो र लागू गरियो । त्यसपछिका ७० वर्षको अवधिमा विभिन्न राजनीतिक घटनाक्रमको उपलब्धिको रूपमा नेपालमा सात वटा संविधान जारी भइसकेको छ ।

मानवीय सम्पदाहरूमा भाषा पनि एक हो । भाषा मानव अभिव्यक्तिको सशक्त माध्यम पनि हो । यो मानव संस्कृति र सभ्यताको वाहक पनि हो । आदिवासी समुदायको लागि भाषा पहिचान पनि हो । यस्तो सम्पदाको संरक्षण, सम्वर्द्धन र विकास गर्नु राज्यको मूख्य दायित्व हुन्छ । दैनिक जीवनको हर क्षेत्र र सन्दर्भहरूमा यसको प्रयोग गर्नु भाषिक समुदायको जन्मसिद्ध अधिकार हो । मान्छेको जन्मले नै पाएको अधिकारको रक्षा गर्नु आधुनिक राज्यको दायित्व हुन्छ । यसर्थ हरेक लेख्य संविधानमा जनताको हक सुरक्षित गरिएको हुन्छ । जनताको अधिकारको रूपमा भाषिक अधिकारका साथै भाषिक मानव अधिकारको पनि व्यवस्था गरिएको हुन्छ ।

नेपालका सातवटै संविधानहरूमा भाषिक व्यवस्था खोज्नु र उपलब्धिको लेखाजोखा गर्नु यस लेखको मुख्य उद्देश्य हो । भाषाको संरक्षण, सम्वर्द्धन, प्रयोग विस्तार र भाषिक अधिकारको प्रमूख स्रोत र संयन्त्र पनि संविधान नै भएकोले यसबारे मातृभाषीहरूको अपेक्षाहरूको आंकलन गर्नु र ओझेलमा पारिएका मुद्दाहरूको निकास खोज्नु यस लेखको अर्को उद्देश्य रहेको छ ।

यसर्थ यस लेखमा संविधान र भाषाको सम्वन्ध स्थापित गरिएपछि समय र सन्दर्भसहित प्रत्येक संविधानमा रहेका भाषिक प्रावधानहरूको लेखाजोखा गर्दै हालसम्मका संवैधानिक उपलब्धिहरूको पुनरावलोकन गरिनेछ । यसपछि मातृभाषीहरूको बाँकी रहेका अपेक्षाहरू र ती अपेक्षाहरू प्राप्तिको लागि अबको बाटो खोज्ने प्रयास हुनेछ । अन्त्यमा हालसम्म प्राप्त उपलब्धिहरूको रक्षाको लागि हाम्रो दायित्वको बारेमा पनि छोटो गन्थन प्रस्तुत गरिनेछ ।[१]

## १. नेपालका संविधानहरूमा व्यवस्थित भाषिक प्रावधानको लेखाजोखा

नेपालमा संविधान निर्माण कार्यको प्रारम्भ वि.सं. २००४ (सन् २०४७) मा भएको थियो र गत ७० वर्षको अवधिमा ७ वटा संविधान निर्माण भए र लागू गरिए । हालसम्मका निर्मित संविधान निम्न छन्-

१. नेपाल सरकारको वैधानिक-कानून २००४
२. नेपाल अन्तरिम शासन विधान २००७
३. नेपाल अधिराज्यको संविधान २०१५
४. नेपालको संविधान २०१९
५. नेपाल अधिराज्यको संविधान, २०४७
६. नेपालको अन्तरिम संविधान, २०६३
७. नेपालको संविधान, २०७२

पछिल्लो सातौं संविधानबाहेक अन्य संविधानहरू जनप्रतिनिधिद्वारा तगार गरिएका होइनन्, राजा वा राजाका प्रतिनिधिले संविधानविज्ञहरूका सहयोगमा तयार पारिएका हुन् । वर्तमान संविधान नेपालको इतिहासमा नै पहिलोपल्ट संविधानसभा अर्थात् ६०१ जना नेपाली जनताका प्रतिनिधि मार्फत् तयार पारिएको दस्तावेज हो । यहाँ ती संविधानहरू र संविधानमा व्यवस्थित भाषिक प्रावधानहरूको अति संक्षेपमा सान्दर्भिक चर्चा प्रस्तुत गरिनेछ ।

### (१) नेपाल सरकारको वैधानिक-कानून २००४ मा भाषा

निरंकुश जहानीय राणाशासनको अन्त्यतिर राणा शासनको विरूद्ध जनताको बढ्दो क्रोधलाई शान्त पार्ने उद्देश्यले राणा प्रधानमन्त्री पद्म शम्सेरले वि.सं. २००४ साल

---

१ प्रस्तुत गोष्ठीपत्र आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानद्वारा २०७३ असार २२ गते (६ जुलाई २०१६)का दिन काठमाडौंमा आयोजित 'नेपालको भाषा नीति तथा मातृभाषाको प्रयोग विस्तार' सम्वन्धी एक दिने गोष्ठीमा प्रस्तुत गरिएको थियो । उक्त दिनको छलफलमा उठेका जिज्ञासाहरूलाई पनि समावेश गरी यो गोष्ठीपत्र परिमार्जन गरिएको छ ।

माघ १३ गतेका दिन *नेपाल सरकार वैधानिक कानून २००४* (Government of Nepal Act 1948) घोषणा गरेका थिए र 'यो कानुन संवत् २००५ साल बैसाख १ गतेदेखि जारी हुनेछ' भनी सो संविधानको धारा २ मा लेखिएको पाइन्छ । नेपालको संवैधानिक कानुनको विकासको क्रममा यो नै पहिलो लिखित दस्तावेज हो । यो संविधान निर्माणको क्रममा 'सुधार समिति' मार्फत् जनताको राय संकलन गरिएको थियो र भारतका ३ जना र नेपालका ३ जना संविधानविज्ञहरूको संलग्नतामा यो कानुन तयार गरिएको थियो ।

यस संविधानमा भाषा सम्वन्धी एउटा मात्रा धारा छ र त्यो हो- धारा ४४ । यस धाराले नेपाली भाषालाई राष्ट्र भाषाको पगरी गुथाउँदै व्यवस्थापिका सभामा छलफलको माध्यमको भाषा रूपमा व्यवस्था गरिएको छ-

> धारा ४४ 'व्यवस्थापक सभाका सबै कुराकानी छलफल इत्यादि **राष्ट्रभाषा नेपालीमा** नै हुनेछ ।'

## (२) नेपाल अन्तरिम शासन विधान २००७ मा भाषा

नेपालमा राणाहरूले १०४ वर्ष लामो परिवारिक शासन गरे । राणा शासनको विरूद्ध चर्केको जनआन्दोलन सफल भएपछि २००७ फागुन ७ गतेका दिन नेपालमा प्रजातन्त्रको स्थापना भयो, एकतन्त्रीय राणा शासनसत्ताको अन्त भयो । तत्कालीन मन्त्रीमण्डलद्वारा तयार गरिएको *नेपाल अन्तरिम शासन विधान २००७* राजा त्रिभूवनले २००७ चैत्र २१ गते (३ मार्च २०५१) सार्वजनिक गरे र सोही साल चैत्र २९ गतेदेखि लागु पनि गरियो । अन्तरिम काल २०१५ साल अर्थात् ८ वर्षसम्म तन्किएको थियो र यस अवधिमा उक्त विधान पनि ६ पल्टसम्म संशोधन गरिएको थियो । पछिल्ला संशोधनहरू क्रमश: राजाका पक्षमा गरिएको पाइन्छ । यस संविधानमा मौलिक अधिकारको व्यवस्था गरिएको भएता पनि भाषा सम्वन्धी कतै कुनै प्रावधान पाइँदैन ।

## (३) नेपाल अधिराज्यको संविधान २०१५ मा भाषा

वि.सं. २०१४ चैत्र ३ गते भगवतीप्रशाद सिंहको अध्यक्षतामा गठित ५ सदस्यीय मस्यौदा समितिले तयार गरेको *नेपाल अधिराज्यको संविधान* २०१५ फागुन १ गते (२०५९ फेब्रुअरी १२) का दिन शाही घोषणाद्वारा जारी भएको थियो । वेलायतका नागरिक आइभर जेनिङ्स, जो एक भाषी थिए, यस संविधान निर्माणमा सल्लाहकारको रूपमा सक्रिय थिए । यस संविधानलाई २००७ सालको जनक्रान्तिको उपलब्धिको रूपमा हेरिएता पनि मातृभाषीको दृष्टिले यस संविधानमा उल्लेखनीय पक्ष केही देखिदैन । यस

संविधानमा भाषिक प्रावधान राणाकालीन संविधानकै निरन्तरता रह्यो । शब्द मात्र हेरफेर गरिएको छ ।यस संविधानमा भाषा सम्वन्धी एउटा मात्रा धारा छ र भनिएको छ–

धारा ७० राष्ट्र भाषा : 'देवनागरी लिपिमा **नेपाली भाषा** नेपालको राष्ट्रभाषा हुनेछ' ।

वि.सं. २००९/२०११ मा प्रकाशित राष्ट्रिय जनगणनाको प्रतिवेदनले नेपालमा ३२ भाषा देखाइएको भएता पनि अन्य मातृभाषीलाई नेपाली भाषा लाद्ने काम गऱ्यो । संयुक्त राष्ट्र संघीय बडापत्र (२०४५)[२] र मानवअधिकारको विश्वव्यापी घोषणापत्र (२०४८)[३] को समेत संविधान निर्माताहरूले कुनै ख्याल राखेको देखिएन । तर संयुक्त राष्ट्र संघबाट सहायता लिने काम भने गरी नै रह्यो ।

## (४) नेपालको संविधान २०१९ मा भाषा

तत्कालीन राजा महेन्द्रले २०१७ पुष १ गते (१५ डिसेम्बर २०६०) का दिन निर्वाचनद्वारा स्थापित प्रजातन्त्रिक सरकारलाई 'कु' गरेर दलहिन पञ्चायती शासन व्यवस्थाको सूत्रपात गरे । दुइ वर्षपछि राजा महेन्द्रबाट वि.सं. २०१९ साल बैसाख १६ गते ऋषिकेष शाहको अध्यक्षतामा ६ सदस्यीय संविधान मस्यौदा आयोग गठन भयो र सो आयोगले तयार गरेको *नेपालको संविधान* वि.सं. २०१९ पुष १ गते लागू गरियो । यस संविधानमा पनि भाषा सम्वन्धी पूर्ववत् धारालाई नै दाहोऱ्यायो र नेपाली नागरिकता लिने विदेशीले नेपाली भाषा बोल्न र लेख्न जानेको हुने पर्ने अर्को शर्त थाप्यो, जस्तैः

धारा ४ राष्ट्र भाषा :'नेपालको **राष्ट्रभाषा** देवनागरी लिपिमा **नेपाली भाषा** हो ।'

धारा ८ नागरिकताको प्राप्ति (२) '— विदेशीलाई नागरिकताको प्राप्ति देहायका कुराका आधारमा हुन सक्ने शर्त राखिनेछ–

(क) नेपालको **राष्ट्रभाषा** बोल्न र लेख्न जान्ने ।

माथिका चार ओटा संविधानका भाषिक प्रावधानहरूलाई अवलोकन गर्दा नेपाली भाषी शासकहरूले आफ्नो भाषालाई राष्ट्र बनाउँदै आफ्नो लागि आयस्रोत बलियो बनाउँदै लगेको र अरू भाषालाई कज्याइ राख्ने नीति लिएको देखिन्छ ।

---

२ संयुक्त राष्ट्र संघको बडापत्र (सन् १९४५)को धारा १(३) र धारा १३(१)(ख) मा '—**भाषा**—मा भेदभाव नगरिकन सबैलाई मानवअधिकार र मौलिक स्वतन्त्रता प्राप्त गराउनमा सहायता गर्ने' भनिएको छ ।

३ *मानव अधिकारको विश्वव्यापी घोषणापत्र*, १९४८ को धारा २ मा व्यवस्था गरिएको छः 'जाति, वर्ण, लिङ्ग, **भाषा**, धर्म, राजनीतिक वा अन्य विचारधारा, राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति, जन्म वा अन्य कुनै हैसियत जस्ता कुनै पनि आधारमा कुनै पनि किसिमको भेदभाव विना कुनै पनि व्यक्तिलाई यस घोषणापत्रमा उल्लेखित **अधिकार र स्वतन्त्रताहरूको अधिकार हुनेछ** ।' तर यो धारा संविधानमा कतै रिफ्लेक्ट भएन ।

## (५) नेपाल अधिराज्यको संविधान, २०४७ मा भाषा

नेपाली जनता राजनीतिक हक अधिकारसहित भाषिक हक प्राप्तिको लागि पनि पञ्चायतकालभरि सक्रिय रहे । ३० वर्षे निर्दलीय पञ्चायती शासनकालमा कैयौंले ज्यान गुमाए । सयौंले जेलनेल भोगे । २०४६ सालको सफल जनआन्दोलनपछि पञ्चायती व्यवस्थाको अन्त्य भयो र सत्र सालमा खोसिएको प्रजातन्त्रको पुनर्स्थापना भयो । प्रजातान्त्रिक सरकारमार्फत् २०४७ मा *नेपाल अधिराज्यको संविधान, २०४७* लागू भयो ।

यस संविधानले पहिलो पल्ट नेपाललाई बहुभाषिक मुलुकको रूपमा स्वीकाऱ्यो (धारा ४) र यसका साथै नेपालमा बोलिने सबै मातृभाषालाई राष्ट्रिय भाषाको रूपमा सम्बोधन पनि गऱ्यो (धारा ६.२) । यसै गरी मातृभाषाको संरक्षण र सम्वर्द्धन गर्ने अधिकारलाई पनि मौलिक हकको रूपमा स्थापित गर्दै मातृभाषी समुदायले मातृभाषामा विद्यालय खोलेर पठनपाठन गर्न सकिने गरी शिक्षा सम्वन्धी हकको पनि स्थापना गऱ्यो (धारा १८) । राज्यका निर्देशक सिद्धान्तहरू[४] र निर्देशक नीतिहरू[५] मा पनि भाषा समाविष्ट छ । यस संविधानले व्यवस्था गरेको भाषा सम्वन्धी प्रावधानहरु निम्नानुसार रहेका छन्-

धारा ४ अधिराज्य : 'नेपाल एक बहुजातीय, **बहुभाषिक** ...अधिराज्य हो ।'

धारा ६ राष्ट्र भाषा (१) 'देवनागरी लिपिमा **नेपाली भाषा** नेपालको राष्ट्रभाषा हो । नेपाली भाषा सरकारी कामकाजको भाषा हुनेछ ।'

(२) 'नेपालका विभिन्न भागमा मातृभाषाका रूपमा बोलिने सबै **भाषाहरु** नेपालका राष्ट्रिय भाषा हुन् ।'

धारा ९ ... नागरिकताको प्राप्ति : (४) '... विदेशीलाई नेपाली नागरिकता प्राप्ति ... गर्न. (क) नेपालको **राष्ट्रभाषा** बोल्न र लेख्न जानेको ।

---

४ नेपाल अधिराज्यको संविधान २०४७, धारा २५. राज्यका निर्देशक सिद्धान्तहरु : (३) 'सबै किसिमका आर्थिक एवं सामाजिक असमानता हटाई विभिन्न जात, जाति, धर्म, **भाषा**, वर्ण र सम्प्रदायका बीच सामञ्जस्य स्थापना गरी न्याय र नैतिकतामा आधारित स्वस्थ्य सामाजिक जीवनको स्थापना र विकास गर्नु राज्यको सामाजिक उद्देश्य हुनेछ ।'

५ नेपाल अधिराज्यको संविधान २०४७, धारा २६. निर्देशक नीतिहरु: (२) 'विभिन्न धर्म, जात, जाति, सम्प्रदाय र भाषा भाषीहरुका वीच स्वास्थ्य एवं सुमधुर सामाजिक सम्वन्ध विकसित गरी सबैको **भाषा**, साहित्य, लिपि, कला र सस्कृतिको विकासदारा देशको साँस्कृतिक विविधता कायमै राखी राष्ट्रिय एकतालाई सुदृढ गर्ने नीति राज्यले अवलम्बन गर्नेछ ।'

धारा १८ संस्कृति तथा शिक्षा सम्वन्धी हक : (१) 'नेपाल अधिराज्यमा बसोबास गर्ने प्रत्येक समुदायलाई आफ्नो भाषा, लिपि, र संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्ने अधिकार हुनेछ ।'

(२) 'प्रत्येक समुदायले बालबालिकालाई प्राथमिक तहसम्म आफ्नो मातृभाषामा शिक्षा दिने गरी विद्यालय सञ्चालन गर्न पाउनेछ ।'

यस संविधानमा भाषाको सम्वन्धमा चार ओटा नौला कुरा देखिन्छ- (१) नेपाललाई बहुभाषिक मुलुकको रूपमा स्वीकार्नु (२) मातृभाषाहरूलाई राष्ट्रिय भाषाको रूपमा संवैधानिक मान्यता प्रदान गर्नु (३) आ-आफ्नो मातृभाषा संरक्षण गर्न पाउने हक प्राप्त हुनु र (४) आ-आफ्ना मातृभाषामा शिक्षा दिने गरी विद्यालय सञ्चालन गर्न पाउने हक प्रदान गर्नु ।

ऐतिहासिक दृष्टिकोणबाट हेर्दा यी भाषिक व्यवस्थाहरू निकै क्रान्तिकारी देखिन्छन् तर दैनिक व्यवहारमा ती हातीको देखाउने दाँत जस्तै देखावटी नै सावित भयो । यस बेलासम्ममा मातृभाषी जनता धेरै सचेत भइसकेको थियो । जनताको आकांक्षा यस संविधानले समेटन सकेन । भाषाका आधारमा धेरै प्रकारको विभेद यस संविधानले उठान गरेको थियो, जस्तैः

पहिलो) यस संविधानले नेपाली भाषालाई 'राष्ट्र भाषा' र अन्य मातृभाषालाई 'राष्ट्रिय भाषा' भनेर विभेद गऱ्यो । यसले भाषिक असमानता खडा गऱ्यो ।

दोस्रो) यस संविधानले नेपाली भाषालाई 'राष्ट्र भाषा' का साथै 'सरकारी कामकाजको भाषा' पनि बनायो । अगिल्ला संविधानहरूमा यो धारा उल्लेख थिएन ।

तेस्रो) मातृभाषी समुदायले आफ्ना बालबालिकालाई मातृभाषामा शिक्षा दिन समुदाय आफैंले विद्यालय खोल्नु पर्ने वाध्यता सिर्जना गऱ्यो । नेपाली भाषी समुदायलाई सरकारले नै प्राथमिक तहदेखि विश्व विद्यालयसम्मको शिक्षाको व्यवस्था गऱ्यो तर मातृभाषी समुदालयले भने आफैं विद्यालय खोल्नु पर्ने गरी विभेद खडा गऱ्यो । यस प्रावधानलाई मातृभाषा ओझेलमा पार्ने र मातृभाषी बालबालिकालाई शिक्षाबाट वञ्चित गर्ने षड्यन्त्रको रूपमा हेरियो । यसले मातृभाषी समुदायलाई अनागरिक वा दोस्रो दर्जाको नागरिक सरहको व्यवहार गर्न प्रोत्साहित पनि गऱ्यो ।

चौथो) विदेशीले नेपाली नागरिकता लिन नेपाली भाषा जानेको हुनु पर्ने र नेपालका अन्य भाषा जानेर नहुने जस्ता प्रावधानबाट पनि राज्यले मातृभाषाप्रति वितृष्णा बोकेको देखियो ।

पाँचौं) एशियाकै नमुना भनिएको यस संविधानले पनि पूर्ववर्ती संविधानले झैं भाषालाई समानताको हक प्रदान गरेन । विभेदहरू कायमै राख्यो । यसका लागि धारा ११(२)(३) हेर्न सकिन्छ ।[६]

यस संविधानले भाषाको आधारमा भाषिक विभेद कायमै राखेको देखिन्छ । २४० वर्ष लामो शाहाकालीन राज्यसत्ताले मातृभाषालाई कहिल्यै समानताको हकसमेत प्रदान गरेन । भाषाको आधारमा भेदभाव गरिरह्यो । अर्कोतिर मातृभाषीहरूले जुनसुकै आन्दोलनको केन्द्रिय मुद्दा र मुख्य माग भाषालाई बनाइ रह्यो । भाषाको मुद्दालाई मातृभाषीहरूले कहिल्यै छाडेनन् । जहाँ पनि जहिले पनि यससँग जोडिइरहे । भाषाको लागि आदिवासी जनजातिलगायत मधेशवासीहरु पनि विभिन्न भाषा आन्दोलनमा होमिनै रहेको पाइन्छ ।

**(६) नेपालको अन्तरिम संविधान, २०६३ मा भाषा**

सठ्चालिसको संविधानले आमजनताको आकांक्षालाई समेटन नसके पछि नेपाल कम्युनिष्ट पार्टी माओवादी नामको पाटी गठन भयो र सो पाटी हतियारसहित जंगल पस्यो । दश वर्षे लामो जनयुद्धमा देश होमिएपछि २०६२/६३ मा देशका सबै पार्टी र जनता जनआन्दोलनमा सक्रिय भए । १९ दिन लामो जनआन्दोलनको परिणाम स्वरूप वैसाख ११ गते देशमा शाही शासन र सत्ताको पनि अन्त्य भयो । लोकतन्त्रको स्थापना मात्र भएन गणतन्त्रको पनि स्थापना भयो । ६०१ सदस्यीय व्यवस्थापिका-संसदले तयार गरेको *नेपालको अन्तरिम संविधान, २०६३* सोही साल माघ १ गते पारित भयो र सोही दिनदेखि लागू पनि गरियो ।

यस संविधानमा भाषिक व्यवस्थाहरु निम्नांकित छन्-

धारा ३. राष्ट्र : 'बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक विशेषतायुक्त राष्ट्र हो ।'

धारा ५ राष्ट्र भाषा : (१) 'नेपालमा बोलिने सबै मातृभाषाहरु राष्ट्रभाषा हुन् ।'
(२) 'देवनागरी लिपिमा नेपाली भाषा सरकारी कामकाजको भाषा हुनेछ ।'

---

६ नेपाल अधिराज्यको संविधान २०४७, धारा ११ समानताको हक (२) 'सामान्य कानुनको प्रयोगमा कुनै पनि नागरिकमाथि धर्म, वर्ण, लिङ्ग, जात, जाति वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन ।' (३) 'राज्यले नागरिकहरुका बीच धर्म, वर्ण, लिङ्ग, जात जाति वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराका आधारमा भेदभाव गरिने छैन ।'

(३) 'उपधारा (४.२) मा जुनसुकै कुरा लेखिएको भए तापनि स्थानीय निकाय तथा कार्यालयमा **मातृभाषा** प्रयोग गर्न कुनै बाधा पुऱ्याएको मानिने छैन । त्यसरी प्रयोग गरिएको भाषालाई राज्यले सरकारी कामकाजको भाषामा रूपान्तर गरी अभिलेख राख्नेछ ।'

धारा १३. समानताको हक : (२) 'सामान्य कानुनको प्रयोगमा कुनै पनि नागरिकमाथि धर्म, वर्ण, लिङ्ग, जात, जाति, उत्पत्ति, **भाषा** वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन ।'

(३) 'राज्यले नागरिकहरूका वीच धर्म, वर्ण, जात, जाति, लिङ्ग, उत्पत्ति, **भाषा** वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन ।'

धारा १७. शिक्षा तथा संस्कृति सम्वन्धी हक : (१) 'प्रत्येक समुदायलाई कानुनमा व्यवस्था भएबमोजिम आफ्नो **मातृभाषामा** आधारभूत शिक्षा पाउने हक हुनेछ ।'

(३) 'नेपालमा बसोबास गर्ने प्रत्येक समुदायलाई आफ्नो **भाषा**, लिपि, संस्कृति, साँस्कृतिक सभ्यता र सम्पदाको संरक्षण र संवर्द्धन गर्ने हक हुनेछ ।'

यस संविधानको धारा ३३ मा राज्यको दायित्व[७], धारा ३४ मा राज्यका निर्देशक सिद्धान्तहरू[८] र धारा ३५ मा राज्यका नीतिहरू[९]मा पनि भाषा परेको छ ।

---

७ नेपालको अन्तरिम संविधान २०६३, धारा ३३. राज्यको दायित्व : (घ) वर्गीय, जातीय, **भाषिक**, लैङ्गिक, साँस्कृतिक, धार्मिक र क्षेत्रीय भेदभावको अन्त्य गर्दै महिला, दलित, आदिवासी जनजाति, मधेशी, उत्पिडित, उपेक्षित र अल्पसंख्यक समुदाय, पिछडिएका क्षेत्र लगायतका समस्याहरूलाई सम्वोधन गर्न राज्यको वर्तमान केन्द्रीकृत र एकात्मक ढाँचाको अन्त्य गरी राज्यको समावेशी, लोकतान्त्रिक र अग्रगामी पुनर्संरचना गर्ने ।

८ नेपालको अन्तरिम संविधान २०६३, धारा ३४. राज्यका निर्देशक सिद्धान्तहरु : (५) सबै कसिमको आर्थिक एवं सामाजिक असमानता हटाइ विभिन्न जात, जाति, धर्म, **भाषा**, वर्ण, समुदाय र समुदाय र सम्प्रदायका वीच सामञ्जस्य स्थापना गरी न्याय र नैतिकतामा आधारित स्वस्थ्य सामाजिक जीवनको स्थापना र विकास गर्नु राज्यको सामाजिक उद्देश्य हुनेछ ।

९ नेपालको अन्तरिम संविधान २०६३, धारा ३५. राज्यका नीतिहरु : (३) 'विभिन्न धर्म, सँस्कृति, जाति, समुदाय, सम्प्रदाय, उत्पत्ति र भाषाभाषीहरूका बीच समानता एवं सहअस्तित्वका आधारमा स्वस्थ र सुमधुर सामाजिक सम्बन्ध विकसित गरी सबैको **भाषा**, साहित्य, लिपि, कला र संस्कृतिको समान विकासद्धारा देशको सांस्कृतिक विविधता कायम राखी राष्ट्रिय एकतालाई सुदृढ गर्ने नीति राज्यले अवलम्बन गर्नेछ ।'

प्रस्तुत संविधानका ४ वटा धारामा ८ वटा भाषिक प्रावधानहरू छन् । यीमध्ये ४ ओटा प्रावधान नयाँ देखिन्छ ।

पहिलो) यस संविधानले 'नेपालमा बोलिने सबै मातृभाषाहरू राष्ट्रभाषा हुन्' (धारा ५.१) भनेर सबै भाषालाई समानताको आँखाले हेरिएको छ र सबै भाषालाई समान तह (equal footing)प्रदान गरेको छ । यस प्रकारको व्यवस्था यसभन्दा अगाडि थिएन ।

दोस्रो) भाषालाई 'स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा प्रयोग गर्न' (धारा ५.३) सकिने गरी मातृभाषाको प्रयोगलाई प्रशासन क्षेत्रमा पनि विस्तार गरिएको छ ।

तेस्रो) मातृभाषी बालबालिकाले आफ्नो 'मातृभाषामा आधारभूत शिक्षा पाउने हक' (१७.१)को पनि व्यवस्था गरिएको छ ।

चौथो) नेपालको संवैधानिक इतिहासमा नै पहिलो पल्ट यस संविधानले सबै भाषालाई समानताको हक प्रदान गरेको छ, भाषाको आधारमा भेदभाव गरिन छैन भनेर प्रतिवद्धता पनि जाहेर गरेको छ (धार १३) ।
यसभन्दा अगाडिका ५ वटै संविधान (२००४, २००७, २०१५, २०१९ र २०४७) मा भाषिक समानताको हकको व्यवस्था गरिएको थिएन ।

यस आधारमा हेर्दा पहिलेका संविधानहरूभन्दा अन्तरिम संविधान निकै गतिशील र केही हदसम्म न्यायपूर्ण पनि देखिन्छ ।

**(७) नेपालको संविधान २०७२ मा भाषा**

संविधानसभा मार्फत् तयार गरिएको संविधान हो- *नेपालको संविधान २०७२* । यो संविधान असोज ३ गते २०७२ मा जारी भयो ।[१०] संवैधानिक इतिहासमा जनताले नै संविधान बनाएर लागू गरेको यो पहिलो ऐतिहासिक घटना पनि हो । यस संविधानमा ३५ भाग, ३०८ धारा र ९ अनुसूची छन् । यस संविधानमा भाषा सम्वन्धी ७ ओटा धारा छ, जस्तैः

धारा ६. राष्ट्रभाषा : नेपालमा बोलिने सबै मातृभाषाहरू राष्ट्रभाषा हुन् ।

धारा ७ सरकारी कामकाजको भाषा : (१) देवनागरी लिपिमा लेखिने नेपाली भाषा नेपालको सरकारी कामकाजको भाषा हुनेछ ।

---

१० यस संविधान जारी गर्दा मधेस लगायतका आदिवासी जनजातिको केही पक्ष असंतुष्ट देखिए । लागू गरिएकै दिन ठाउँठाउँमा उनीहरूले संविधान जलाएका थिए ।

(२) नेपाली भाषाका अतिरिक्त प्रदेशले आफ्नो प्रदेशभित्र बहुसंख्यकजनताले बोल्ने एक वा एकभन्दा बढी अन्य राष्ट्रभाषालाई प्रदेश कानून बमोजिम प्रदेशको सरकारी कामकाजको भाषा निर्धारण गर्न सक्नेछ ।

(३) **भाषा** सम्बन्धी अन्य कुरा भाषा आयोगको सिफारिसमा नेपाल सरकारले निर्णय गरे बमोजिम हुनेछ ।

धारा १८. समानताको हक : (२) सामान्य कानूनको प्रयोगमा उत्पत्ति, धर्म, वर्ण, जात, जाति, लिंग, शारीरिक अवस्था, अपांगता, स्वास्थ्य स्थिति, वैवाहिक स्थिति, गर्भावस्था, आर्थिक अवस्था, **भाषा** वा क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै आधारमा भेदभाव गरिने छैन ।

(३) राज्यले नागरिकहरूका बीच उत्पत्ति, धर्म, वर्ण, जात, जाति, लिंग, आर्थिक अवस्था, **भाषा**, क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै आधारमा भेदभाव गर्ने छैन ।

धारा ३१. शिक्षा सम्बन्धी हक : (१) प्रत्येक नागरिकलाई आधारभूत शिक्षामा पहुँचको हक हुनेछ ।

(२) प्रत्येक नागरिकलाई राज्यबाट आधारभूत तहसम्मको शिक्षा अनिवार्य र निःशुल्क तथा माध्यमिक तहसम्मको शिक्षा निःशुल्क पाउने हक हुनेछ ।

(५) नेपालमा बसोबास गर्ने प्रत्येक नेपाली समुदायलाई कानून बमोजिम आफ्नो **मातृभाषामा शिक्षा** पाउने र त्यसका लागि विद्यालय तथा शैक्षिक संस्था खोल्ने र सञ्चालन गर्ने हक हुनेछ ।

धारा ३२. भाषा तथा संस्कृतिको हक : (१) प्रत्येक व्यक्ति र समुदायलाई आफ्नो **भाषा प्रयोग गर्ने हक** हुनेछ ।

(३) नेपालमा बसोबास गर्ने प्रत्येक नेपाली समुदायलाई आफ्नो **भाषा**, लिपि, संस्कृति, सांस्कृतिक सभ्यता र सम्पदाको संवर्धन र संरक्षण गर्ने हक हुनेछ ।

धारा ५१ (ग) सामाजिक र सांस्कृतिक रूपान्तरण सम्बन्धी नीति : (७) **बहुभाषिक नीति** अवलम्बन गर्ने ।

धारा २८७. भाषा आयोगः (१) यो संविधान प्रारम्भ भएको मितिले एक वर्षभित्र नेपालसरकारले प्रदेशहरूको प्रतिनिधित्व हुने गरी एक **भाषा आयोग**को गठन गर्नेछ ।

(२) भाषा आयोगमा अध्यक्षका अतिरिक्त आवश्यक संख्यामा सदस्यहरू रहनेछन् ।

(३) भाषा आयोगका अध्यक्ष र सदस्यको पदावधि नियुक्तिको मितिले छ वर्षको हुनेछ । निजहरूको पुनः नियुक्ति हुन सक्ने छैन ।

(४) देहायको योग्यता भएको व्यक्ति भाषा आयोगको अध्यक्ष वा सदस्यको पदमा नियुक्त हुन योग्य हुनेछः (क) मान्यताप्राप्त विश्वविद्यालयबाट सम्बन्धित विषयमा स्नातकोत्तर उपाधि प्राप्त गरेको, (ख) नेपालका विभिन्न भाषाहरूको सम्बन्धमा अध्ययन, अध्यापन, अनुसन्धान र अन्वेषणको क्षेत्रमा कम्तीमा बीस वर्षको कार्य अनुभव भएको, (ग) पैंतालिस वर्ष उमेर पूरा भएको, र (घ) उच्च नैतिक चरित्र भएको ।

(५) देहायको कुनै अवस्थामा भाषा आयोगका अध्यक्ष वा सदस्यको पद रिक्त हुनेछः-

(क) निजले लिखित राजीनामा दिएमा, (ख) निजलाई नेपाल सरकार, मन्त्रि परिषद्ले हटाएमा, (ग) निजको उमेर पैंसट्ठी वर्ष पूरा भएमा, (घ) निजको मृत्यु भएमा ।

(६) भाषा आयोगको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछः- (क) सरकारी कामकाजको भाषाका रूपमा मान्यता पाउन पूरा गर्नुपर्ने आधारहरूको निर्धारण गरी नेपाल सरकार समक्ष भाषाको सिफारिस गर्ने, (ख) भाषाहरूको संरक्षण, संवर्धन र विकासका लागि अवलम्बन गर्नुपर्ने उपायहरूको नेपाल सरकार समक्ष सिफारिस गर्ने, (ग) मातृभाषाहरूको विकासको स्तर मापन गरी शिक्षामा प्रयोगको सम्भाव्यताका बारेमा नेपाल सरकार समक्ष सुझाव पेश गर्ने, (घ) भाषाहरूको अध्ययन, अनुसन्धान र अनुगमन गर्ने ।

(७) भाषा आयोगले उपधारा (६) को खण्ड (क) बमोजिमको कार्य आयोग गठन भएको मितिले पाँच वर्ष भित्र सम्पन्न गर्नेछ ।

(८) नेपाल सरकारले प्रदेश सरकारसँग समन्वय गरी प्रदेशमा भाषा आयोगको शाखा स्थापना गर्न सक्नेछ ।

(९) भाषा आयोगको अन्य काम, कर्तव्य र अधिकार तथा कार्यविधि संघीय कानून बमोजिम हुनेछ ।

यस अतिरिक्त संविधानको प्रस्तावनामा (क) बहुभाषिकतालाई आत्मसात गरी, (ख) भाषा विभेदको अन्त्य गरी समतामूलक समाजको निर्माण गर्ने जस्ता शब्दवली परेका छन् । राज्यको निर्देश सिद्धान्तहरूमा भाषा शब्द नपरेता पनि (ग) राज्यका नीतिहरूमा राष्ट्रिय एकता, पारस्परिक सद्भाव, सहिष्णुता र एक्यवद्धता कायम गर्ने सन्दर्भमा भाषा शब्दवलीको समाविष्ट छ ।

यस संविधानमा व्यवस्थित ७ मध्ये ३ ओटा प्रावधान नयाँ छन्, जस्तैः

पहिलो) यस संविधानले 'नेपाली भाषाका अतिरिक्त प्रदेशले आफ्नो प्रदेशभित्र बहुसंख्यकजनताले बोल्ने एक वा एकभन्दा बढी अन्य राष्ट्रभाषालाई प्रदेश कानून बमोजिम प्रदेशको सरकारी कामकाजको भाषा निर्धारण गर्न सक्नेछ' (धारा ७.२) भनेर नेपाली भाषा बाहेकका अन्य मातृभाषाहरू पनि सरकारी कामकाजको भाषा हुने व्यवस्था गरिएको छ । यो अहिलेसम्मकै महत्त्वपूर्ण उपलब्धि मान्न सकिन्छ ।

यस्तै गरी २०६३ को संविधानले त 'स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा प्रयोग गर्न' (धारा ५.३) सकिने व्यवस्था गरिएको थियो । तर यो प्रावधान वर्तमान संविधानमा छैन ।

दोस्रो) धारा ५१(ग)(७)मा 'बहुभाषिक नीति अवलम्बन गर्ने' प्रावधान छ । यो धारा पनि पहिलो पल्ट देखिएको हो । नेपालमा हालसम्म भाषा नीतिको निर्माण भएको छैन । टाक्राटुक्रे भाषा नीतिको भरमा देश चलिरहेको छ ।

तेस्रो) यस संविधानमा भाषा आयोगको गठन गर्ने प्रावधान छ (धारा २८७.१) र यस आयोगको काम, कर्त्तव्य र अधिकार पनि तोकिएको छ । अब नेपालको भाषा समस्या क्रमशः हल हुने अपेक्षा गर्न सकिन्छ ।

तर पनि मातृभाषीहरूको आकांक्षा अनुरूप र अन्तर्राष्ट्रिय सन्धि महासन्धी अनुरूप यो संविधानमा भाषिक प्रावधान पाइँदैन । अन्तर्राष्ट्रिय कानुनको रूपमा रहेको महासन्धी, घोषणापत्र आदिलाई यस संविधानले पनि वेवास्ता गरिएको छ । यसको चर्चा मातृभाषीहरूको आकांक्षा र अपेक्षा शीर्षकमा गरिएको छ ।

## २. संविधानमा भाषिक उपलब्धिहरूको पुनरावलोकन

नेपालका संविधानहरू सरसर्ती अध्ययन गर्दा भाषाको प्रयोग क्षेत्र क्रमशः विस्तार भएको देखिन्छ । नेपालका संविधानहरूले भाषाको संरक्षण र सम्वर्धन, मातृभाषामा शिक्षादेखि स्थानीय निकाय तथा कार्यालयमा र व्यवस्थापिकामा समेत भाषाको व्यवस्था भएको छ । यी सबै भाषिक व्यवस्थालाई निम्नानुसार प्रस्तुत गर्न सकिन्छ-

(१) **बहुभाषिकता**ः एक सयभन्दा धेरै भाषा बोलिने समुदाय बसोबास गर्ने भएता पनि २०४६ सम्म नेपाल अघोषित रूपमा एक भाषिक मुलुक नै थियो । 'एक भाषा एक भेष' राज्यको मूल नीति र नारा थियो । पञ्चायती शासकहरूले यो नारा निकै धन्काए । सर्वप्रथम नेपाल अधिराज्यको संविधान, २०४७ मा 'नेपाल एक बहुजातीय, बहुभाषिक ... अधिराज्य हो' (धारा ४.१) भनेर स्वीकारियो र अन्तरिम संविधान र अहिलेको संविधानले पनि यसलाई निरन्तरता दिइएका छन् । नेपालको संविधानको यो एउटा प्रमूख विशेषता हो ।

(२) **बहुभाषिक नीति**ः नेपालको संविधान २०७२ ले 'बहुभाषिक नीति' अवलम्बन गर्ने' प्रावधान छ । यो धारा पहिलो पल्ट व्यवस्था गरिएको हो । नेपालमा हालसम्म राष्ट्रिय भाषा नीति बनेको थिएन । अब नेपालले बहुभाषिक नीतिलाई अवलम्बन गर्नेछ भन्ने विश्वास लिन सकिन्छ ।

(३) **सरकारी कामकाजको भाषा**ः नेपाल अधिराज्यको संविधान २०४७ ले 'नेपाली भाषा सरकारी कामकाजको भाषा हुनेछ' (धारा ६.१ ) भनेर व्यवस्था गर्‍यो र यसलाई नेपालको अन्तरिम संविधान २०६३ र नेपालको संविधान २०७२ ले पनि निरन्तरता दिइएको छ । र वर्तमान संविधानले 'प्रदेशभित्र बहुसङ्ख्यक जनताले बोल्ने एक वा एकभन्दा बढी अन्य राष्ट्रभाषालाई ... प्रदेशको सरकारी कामकाजको भाषा निर्धारण गर्न सकिनेछ' जस्ता प्रवधानको व्यवस्था गरेको छ । अब प्रदेश तहमा मातृभाषाहरू पनि सरकारी कामकाजको भाषा हुनेछन् ।

(४) **स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा**ः नेपालको अन्तरिम संविधान २०६३ ले 'स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा प्रयोग गर्न कुनै बाधा पुर्‍याएको मानिने छैन । त्यसरी प्रयोग गरिएको भाषालाई राज्यले सरकारी कामकाजको भाषामा रूपान्तर गरी अभिलेख राख्नेछ' (धारा ५.३) भनेर स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा प्रयोग गर्न सकिने व्यवस्था गरेको छ । तर पछिल्लो संविधानमा यो प्रावधान छैन ।

(५) **मातृभाषामा शिक्षा**ः इतिहासमै पहिलो पल्ट २०४७ को संविधानले 'प्रत्येक समुदायले बालबालिकालाई प्राथमिक तहसम्म आफ्नो मातृभाषामा शिक्षादिने गरी विद्यालय सञ्चालन गर्न पाउने छ' (१८.२) भनेर प्राथमिक तहसम्म मातृभाषामा शिक्षाको व्यवस्था गरेकोमा अन्तरिम संविधानले 'आफ्नो मातृभाषामा आधारभूत शिक्षा पाउने हक' (१७.१) को व्यवस्था गर्‍यो । वर्तमान संविधानले पनि 'आफ्नो मातृभाषामा शिक्षा पाउने र त्यसका लागि विद्यालय तथा शैक्षिक संस्था खोल्ने र सञ्चालन गर्ने हक (धारा ३१.५) को व्यवस्था गरेको छ ।

(६) **राष्ट्रभाषा**: सर्वप्रथम २००४ सालको संविधानमा नेपाली भाषाको लागि 'राष्ट्रभाषा' शब्दको प्रयोग भएको थियो र यसपछिका सबै संविधानहरूले यस अवधारणालाई निरन्तरता दिएका छन् ।

(७) **राष्ट्रिय भाषा**: नेपाल अधिराज्यको संविधान २०४७ ले 'नेपालको विभिन्न भागमा मातृभाषाका रूपमा बोलिने सबै भाषाहरु नेपालका राष्ट्रिय भाषा हुन्' (धारा ६.२) भनेर राष्ट्रिय भाषाको व्यवस्था गरेको थियो तर यो शब्दावली भाषा विभेदको मुद्दा बन्यो । पछिका संविधानमा प्रयुक्त भएन ।

(८) **नागरिकता प्राप्तिमा भाषा**: नेपालको संविधान २०१९ मा विदेशीले नेपाली नागरिकता लिन उसले 'नेपालको राष्ट्रभाषा बोल्न र लेख्न जान्ने' हुनु पर्ने शर्तसहितको व्यवस्था (धारा ८.२) गरेको थियो र २०४७ को संविधानमा पनि हुबहु व्यवस्था गर्‍यो । तर यसपछि यो शब्दावलीको प्रयोग भएको पाइँदैन ।

(९) **समानताको हकमा भाषा**: सर्वप्रथम नेपालको अन्तरिम संविधान २०६३ मा 'सामान्य कानुनको प्रयोगमा कुनै पनि नागरिकमाथि धर्म, वर्ण, लिङ्ग, जात, जाति, उत्पत्ति, भाषा वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन' (धारा १३.२) र 'राज्यले नागरिकहरूका बीच धर्म, वर्ण, जात, जाति, लिङ्ग, उत्पत्ति, भाषा वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गरिने छैन' (धारा १३.३) भनेर समानताको हकमा भाषा पनि समावेश गरेको थियो । वर्तमान संविधानमा पनि यो हक (धार १८)ले प्रवेश पाएको छ ।

(१०) **मातृभाषाको संरक्षण र सम्वर्द्धन** : २०४७ को संविधानले संस्कृति तथा शिक्षा सम्वन्धी हकमा 'नेपाल अधिराज्यमा बसोबास गर्ने प्रत्येक समुदायलाई आफ्नो भाषा, लिपि र संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्ने अधिकार हुनेछ' (१८.१) भनेर भाषाको संरक्षण र सम्वर्द्धन गर्ने हकको व्यवस्था गरेको थियो । अन्तरिम संविधानले पनि 'नेपालमा बसोबास गर्ने प्रत्येक समुदायलाई आफ्नो भाषा, लिपि, संस्कृति, सांस्कृतिक सभ्यता र सम्पदाको संरक्षण र संवर्द्धन गर्ने हक हुनेछ' (१७.३) भनेर भाषा संरक्षणलाई निरन्तरता दियो र वर्तमान संविधानमा पनि यो प्रावधान छ ।

(११) **व्यवस्थापिका सभामा भाषा**: नेपाल सरकारको वैधानिक कानुन २००४ ले 'व्यवस्थापक सभाका सबै कुराकानी छलफल इत्यादि राष्ट्रभाषा नेपालीमा नै हुनेछ' (धारा ४४) भन्ने प्रावधान छ । तर यसपछिका संविधानहरूमा यो धारा पाइँदैन । २०४७ र यसपछिका संविधानहरूले नेपली भाषलाई सरकारी कामकाजको भाषा तोके पछि यसको आवश्यकता नपरेको हुनसक्छ ।

(१२) **राज्यको दायित्वमा भाषाः** नेपालको अन्तरिम संविधान, २०६३ को धारा (३३.घ) ले भाषिक विभेद हटाउने दायित्व राज्यको हो भनेर किटान गरेको थियो । वर्तमान संविधानले यस धाराको आवश्यकता महशुस भएको देखिएन ।

(१३) **राज्यका निर्देशक सिद्धान्तहरूमा भाषा:** संविधान २०४७ ले 'सबै किसिमका आर्थिक एवं सामाजिक असमानता हटाइ विभिन्न जात, जाति, धर्म, भाषा, वर्ण र सम्प्रदायका बीच सामञ्जस्य स्थापना गरी न्याय र नैतिकतामा आधारित स्वस्थ्य सामाजिक जीवनको स्थापना र विकास गर्नु राज्यको सामाजिक उद्देश्य हुनेछ' (२५.३) भनिएको थियो र अन्तरिम संविधानले पनि यसै आसयले भाषा समेटिएको छ । तर वर्तमान संविधानमा यो व्यवस्था छैन ।

(१४) **राज्यका नीतिहरू:** २०४७ को संविधानमा 'विभिन्न धर्म, जात, जाति, सम्प्रदाय र भाषा भाषीहरूका वीच स्वास्थ्य एवं सुमधुर सामाजिक सम्वन्ध विकसित गरी सबैको भाषा, साहित्य, लिपि, कला र सस्कृतिको विकासदारा देशको सांस्कृतिक विविधता कायमै राखी राष्ट्रिय एकतालाई सुदृढ गर्ने नीति राज्यले अवलम्बन गर्नेछ' (२६.२) भनेको छ भने नेपालको अन्तरिम संविधान २०६३ र नेपालको संविधान २०७२ ले पनि यस आसयलाई कायम राखेका छन् ।

## ३. संविधानमा मातृभाषी समुदायका अपेक्षाहरू

तुलनात्मक रूपमा अघिल्ला संविधानहरूभन्दा *नेपालको संविधान २०७२* गतिशिल वा प्रगतिशील देखिएता पनि यसले मातृभाषीहरूको आकाक्षालाई राम्रोसँग प्रतिविम्बित गर्न सकेको छैन । मातृभाषीहरूको आकांक्षा असिमित वा अथाह छैनन् तर राज्यले किस्तावन्दीमा भाषिक अधिकारहरू प्रत्यायोजन गर्ने परम्परा बसालेको छ । राज्यले सधैं भाषिक आन्दोलनको अपेक्षा राख्ने गरेको छ । यहाँ मातृभाषीहरूको आकांक्षा प्रस्तुत गर्नुभन्दा अगाडि भाषाको प्रयोग क्षेत्रको अवलोकन गर्नु पनि आवश्यक ठान्छु ।

**(क) भाषाको आन्तरिक प्रयोग**

१. दैनिक जीवनयापनमा
२. धार्मिक-सांस्कृतिक अनुष्ठानहरूमा
३. स्थानीय हाट-बजार, व्यापार र व्यावसायहरूमा
४. व्यक्ति नाम, स्थान नाम र अन्य नामहरूमा
५. साहित्य सिर्जना, अभिव्यक्ति र सांस्कृतिक आकांक्षाहरूमा ।

(ख) भाषाको वाह्य प्रयोग

६. सूचना र आमसञ्चारमा

७. शिक्षामा

८. प्रशासनमा

९. लोकसेवा आयोगमा

१०. अदालतमा

११. संसद र व्यवस्थापिका प्रक्रियाहरूमा

१२. सार्वजनिक सेवा, संस्थान र अध्ययन अनुसन्धानहरूमा ।

'भाषाको आन्तिरिक प्रयोग' भनेको भाषिक समुदाय स्वयम्ले भाषा प्रयोग गर्ने क्षेत्रहरू हुन् । वक्ताको आधार क्षेत्रको आधारमा मातृभाषाको क्षेत्र घटबढ हुने गर्दछ । संविधानको धारा ३२ मा सार्वजनिक जीवनमा भाषा प्रयोग गर्न पाउने हकको व्यवस्था गरिएको छ । यो मातृभाषी समुदायका जन्मसिद्ध वा नैसर्गिक अधिकार भएता पनि पञ्चायतीकालमा सार्वजनिक स्थलमा मातृभाषा बोल्न रोक लगाइन्थ्यो । 'मान्छे खाने कुरा' वा 'गाई खाने कुरा' गरेको भनेर अपहेलना गर्ने गर्दथ्यो ।

यस्तै 'भाषाको वाह्य प्रयोग' शब्दावलीले मातृभाषाको प्रयोग क्षेत्रको विस्तार र राज्यको दायित्वको पनि बोध गराउँछ, जस्तै सूचना र आमसञ्चार, शिक्षा, प्रशासन, लोकसेवा आयोग, अदालत, संसद र व्यवस्थापिका प्रक्रियाहरू, सार्वजनिक सेवा, संस्थानहरूमा पनि मातृभाषाको प्रयोग गर्न पाइयोस् भन्ने अपेक्षा मातृभाषीहरूको रहेको हुन्छ ।

यसैको आधारमा भाषिक मुद्दा निर्धारण हुने गर्दछ । राज्यसँगको टसल पनि यिनै मुद्दाहरूमा हुने गर्दछ । यी क्षेत्रमा राज्यले बेरोकटोक भाषा प्रयोगमा अनुमति दिओस् र राज्यले जिम्मेवारी वहन गरोस् भन्ने अपेक्षा राखेको हुन्छ । उदाहरणको लागि प्रहरी हिरासतमा रहेको आफ्ना आफ्न्तजनलाई भेटघाट गर्न पञ्चायतकालमा मातृभाषामा बोल्न दिइदैन थियो । नेपाली भाषा नै प्रयोग गर्नु पर्ने बाध्यता थियो । अहिले पनि यो क्रियाकलाप कायम रहेको गुनोस मातृभाषीहरूले गर्ने गरेको सुनिन्छ । अन्तर्राष्ट्रिय सन्धी, महासन्धी, घोषणापत्र आदिमा नेपालले कबोल गरे अनुसारको भाषा नीति नेपालमा पनि होस् भन्ने चाहना नेपालका आदिवासीहरूको रहेको छ ।

## ४. अबको बाटो

### (१) संविधान संशोधनको लागि सिफारिस गरिनु पर्ने भाषिक मुद्दाहरू

वर्तमान संविधानमा (१) मातृभाषामा सूचनाको हकको प्रावधान छैन, (२) अदालतमा मातृभाषा (langauge of trails) प्रयोग गर्न पाउने हकको पनि व्यवस्था छैन,

(३) लोकसेवामा मातृभाषा प्रयोगको हकको प्रावधान पनि छैन, (४) लोपोन्मुख भाषाहरूबारे गर्ने केही छैन र (५) स्थानीय सरकारमाकामकाजी भाषाको रूपमा मातृभाषाको प्रयोग र (६) भाषा संरक्षण सम्वर्द्धनको लागि प्रयाप्त सरकारी सहयोगको व्यवस्था पनि गरिएको छैन र कुनै भाषिक संयन्त्रको व्यवस्था पनि सरकारले गर्न सकेको छैन ।

यसै गरी (७) प्रदेश र स्थानीय व्यवस्थापिका, व्यवस्थापीय प्रक्रिया र प्रशासनको भाषा, (८) स्थानीय र प्रदेशको भाषा, (९) प्रान्त प्रान्त बीचको अन्तर-प्रान्तीय भाषा, (१०) प्रान्त र संघबीचको अन्तर सम्वन्धको भाषाको बारेमा पनि यो संविधानले मौन धारण गरेको छ ।

केन्द्रीय तथ्याङ्क विभागले १२३ मातृभाषाको सूची प्रकाशित गरेको छ र यीमध्ये अङ्ग्रेजी, फ्रान्स, इटाली, रसियन, चाइनिज, नागा, आसामी आदि २७ वटा विरन्ते भाषालाई पनि नेपालको मातृभाषाको सूचीमा राखेको छ । उक्त विभागको गैरजिम्मेवारीपनालाई सभासदहरूले पनि संविधानमा हुबहु उतारेर नालयकीपनाको प्रदर्शन गरेको देखियो । संविधानमा नेपालका रैथाने भाषाहरूको सूची राखेको भए वा प्रदेशमा बोलिने एक वा दुइ रैथाने भाषाहरू प्रदेश सरकारको सरकारी कामकाजको भाषा हुनेछ भनेको देश झमेलामा फस्ने थिएन ।

भाषिक मुद्दाहरू सिफारिस गर्न भाषा आयोगको प्रावधान छ । गठित भाषा आयोगले सुझाव पेश गर्ने हुनाले मातृभाषीहरू त्यसतर्फ आकर्षित हुन आवश्यक छ । नेपालको संविधान २०७२ को धारा २८७(३)ले यसलाई यसरी कबोल गरेको छ, जस्तैः

> "भाषा सम्बन्धी अन्य कुरा भाषा आयोगको सिफारिसमा नेपाल सरकारले निर्णय गरे बमोजिम हुनेछ ।" धारा २८७(३)

भाषा संरक्षण र भाषा अधिकारको पहिलो र प्रमुख संयन्त्र (Instruments)संविधान हो । संविधानमा व्यवस्था भएपछि सोही आधारमा ऐन कानुन र निर्देशिका बन्छन् र कार्ययोजना बनेर कार्यान्वयन हुने गर्दछ । यसर्थ माथि उठाइएका र उठाउन सकिने अन्य भाषिक मुद्दाहरू र प्राप्त अधिकारलाई कार्यान्वयनको लागि पनि नेपाल सरकारलाई सुझाव दिन र आवश्यक परे दबाव दिन पनि आवश्यक हुन्छ । मातृभाषीहरू राणाकालदेखिनै भाषिक मुद्दाहरू उठाउदै, लडदै, भिडदै आइरहेका छन् । हालसम्मको उपलब्धि पनि उनीहरूकै जागरूकताबाट सम्भव भएको हो । भाषिक आकांक्षाहरू उनीहरूसंग गाँसिएका छन् । नेपाली भाषी राज्यसत्ता आफुलाई मालिक ठान्दछ, दाता कहलाउन चाहन्छ। अझै पनि राज्यसत्ता आम मातृभाषीको पक्षमा हुन नसकेको जनगुनासो रहेसम्म यस तर्फ मातृभाषीहरू सतर्क हुन आवश्यक छ ।

### (२) मातृभाषा संरक्षण, संवर्धन र प्रयोग विस्तारको लागि प्रतिवद्धता

हालसम्म प्राप्त भाषिक अधिकारहरूको संरक्षण तथा सम्वर्धन र कार्यान्वयन अनि भाषाको प्रयोग विस्तारका लागि मातृभाषीहरू सचेत, सतर्क र सक्रिय हुन आवश्यक छ । यसलाई निम्नानुसार प्रस्तुत गर्ने सकिन्छः

(१) प्रत्येक बालबालिकालाई आफ्नो पहिचानसहित नामकरणको हक हुनेछ (धारा ३९) भनेर संविधानमा व्यवस्था गरिएको छ । यो धारा यूएनड्रिपमा पनि व्यवस्थित छ । नामकरण भाषा बचाउने एउटा सशक्त माध्यम हो । यसर्थ आफ्ना बालबालिकाको नाम मातृभाषामा राख्नु पर्दछ र अन्य सर्वसाधरणलाई पनि प्रोत्साहित गरिनु पर्छ ।

(२) मातृभाषामा रहेका स्थान नामहरूको सर्वेक्षण गर्ने र ती स्थान नामहरूको संरक्षण र सम्वर्धन गर्नु आवश्यक हुन्छ । यस्ता नामले भाषिक पहिचान र इतिहासलाई बलियो बनाउँछ ।

(३) आफ्नो मातृभाषामा शिक्षा पाउनु बालबालिकाको नैसर्गिक अधिकार हो । यो संवैधानिक अधिकार पनि हो । बालविकास केन्द्र र आधारभूत शिक्षा मातृभाषामा दिनु पर्छ । यसै गरी अनौपचारिक शिक्षा पनि मातृभाषामा दिने व्यवस्था गरिनु पर्दछ । शिक्षकहरू मातृभाषा मैत्री हुन आवश्यक छ । यसबारे बहुभाषिक शिक्षा निर्देशिका २०६६ हेर्न सकिन्छ ।

(४) लोपोन्मुख मातृभाषीहरूले र अन्य व्यक्ति वा समुदायले पनि घरपरिवार, दैनिक व्यवहार र सार्वजनिक स्थानहरूमा मातृभाषाको नियमित प्रयोग गर्नुपर्छ । यसबाट भाषाको पुस्तान्तरण दिगो हुन्छ ।

(५) मृतप्रायः अवस्थाका (एक हजारभन्दा कम वक्ता भएका) भाषाहरूको संरक्षण र संवर्दनको लागि ती भाषाका वक्ताहरूलाई नै बचाउन विषेश संयन्त्र बनाउनु पर्छ ।

(६) लोपोन्मुख, मरणोन्मुख तथा मृतप्रायः अवस्थामा पुगेका भाषाहरूको संरक्षण र सम्वद्धर्नको लागि ती भाषामा रहेका लोकसाहित्यको सङ्कलन र विकास गर्न मातृभाषी स्रष्टाहरूलाई प्रोत्साहित गरिनु पर्दछ र उनीहरूका कृति प्रकाशन गर्न सहयोग गरिनु पर्छ ।

(७) मातृभाषाका भाषिक तथा साहित्यिक संस्थाहरूलाई आर्थिक टेवा दिनु पर्छ ।

(८) मातृभाषिक समुदायमा रहेको मौलिक संस्कृति र सम्यताको अध्ययन, अनुसन्धान र संरक्षण गर्नु पर्छ ।

(९) संविधानमा नै मातृभाषामा सूचनाको हक स्थापित गर्नु पर्छ ।

(१०) संविधानमा व्यवस्था भए अनुरूप देशको हरेक क्षेत्रमा बहुभाषिक नीति निर्माण गरी लागू गराउनमा जोड लगाउनु पर्छ ।

(११) भाषा प्रयोगको लागि आवश्यक सम्पूर्ण सुविधा राज्यले व्यहोर्ने व्यवस्था पनि संविधानमा नै उल्लेख गरिनु पर्दछ ।

(१२) स्थानीय मातृभाषाप्रति सम्मान जनाउन स्थानीय तहका पदवाला जो कोहीले स्थानीय भाषा जान्न अनिवार्य गरिनु पर्दछ ।

(१३) मातृभाषाको सम्मान, संरक्षण र विकासका लागि अधिकार सम्पन्न भाषा संस्थान वा भाषा प्रतिष्ठान स्थापना गरिनु पर्छ वा संविधानतः भाषा आयोगलाई नै यो अधिकार दिइनु पर्छ ।

## ५ उपलब्धिको जर्गेना र हाम्रो दायित्व

हालसम्म प्राप्त भाषिक उपलब्धिहरूको संरक्षण गर्दै अपेक्षित बाँकी मागहरूको प्राप्तिको लागि सदा सजग र तत्पर रहनु पर्दछ । बाधक तत्वहरूलाई चिन्न पनि आवश्यक छ । यी उपलब्धिहरू हाम्रा अग्रजहरूको त्याग र बलिदानीबाट प्राप्त भएको परिणाम हुन् । हामीले हाम्रा भाषिक आन्दोलनले उठान गरेको मुद्दा र भाषिक अभियन्ताहरूको साहसिक कार्यलाई भुल्नु हुँदैन । उपलब्धिहरूलाई तुहिन दिनु पनि हुँदैन र तुहाउन चाहनेहरूको पहिचान गरेर समयमै उपचार गर्नु सक्नु पनि पर्छ ।

भाषिक आन्दोलनको इतिहासले देखाएको कुरा के हो भने राणाकालमा आफ्ना भाषा, लिपिको पठनपाठन गरेबापत लालसोर सेन्दाङ लगायतले ज्यान बचाउन १९७१ मा आफ्नो थातथलो छोडेर सिक्किम पस्नु परेको थियो । मातृभाषामा साहित्य रचना गर्ने कविकेशरी चित्तधर (१९९७) लगायतले जेलनेल भोगे । सिद्धिचरण श्रेष्ठ, फत्तेबहादुर सिंह (सन् १९९७) लगायतलाई सर्वस्वहरणसहित आजन्म कारावास दिए । मातृभाषाहरूलाई जंगली भाषा भनेर गलहत्याइए । मातृभाषामा लेखिएका लिखतहरू अदालतमा पेश गर्न नपाइने बनाए आदि (सुब्बा र साथीहरू, सन् २००२) ।

पञ्चायतकालमा पनि वीर नेम्बाङ जस्ता युवाहरूले आफ्नो भाषा र लिपि सिकाए वापत जेल जानु पर्‍यो । आफ्नो मातृभाषा बोले वापत अपमानित हुनु पर्दथ्यो । पञ्चायत कालमा भाषाले पेट भर्दैन भनेर भित्ता रङ्गाउनेहरू पनि शासकीय भाषीहरू नै थिए । घल राई जस्ता भाषिक मुद्दा उठाउने पत्रकारहरूलाई विष खुवाएर मार्ने दुष्प्रयास पनि गरे । मातृभाषा बोले बापत अपमानित हुन परेका थुप्रै घटनाहरू कथा, उपकथा र उखान टुक्काको रूपमा हाम्रो मन मस्तिष्कमा ताजै छन् ।

मातृभाषी बालबालिकालाई मातृभाषामा पठनपाठन गर्न नदिइएको, पठनपाठन रोक्न प्रतिवेदनहरू जारी गरेको, भाषा बोलेबापत दण्डसजाय दिइएको, जेलनेलमा मातृभाषा बोल्न रोक लगाइएका थुप्रै कथा व्यथाहरू मातृभाषीहरूसँग छ । २०४६ सम्मको राज्यको नीतिले राज्यसत्ता भनेको शासक जातिको मात्र पेवा हो भन्ने संकेत गर्दछ । उनीहरू मातृभाषिक समुदायको अधिकारको कुरा होइन कि आफ्नो भाषालाई राष्ट्र भाषा बनाउँदै आम जनतामा लादन चाहेको देखिन्छ ।[११]

दुइवटा अदालती घटना हाम्रो मनमा ताजै छ । पहिलो, सर्वोच्च अदालतले काठमाडौं महानगरपालिका र राजविराज नगरपालिकामा मातृभाषाको प्रयोगमा रोक लगायो र अर्को, पहिलो उपराष्ट्रपतिलाई उनले आफ्नो मातृभाषामा ग्रहण गरेको सपथलाई दोहोर्‍याएर नेपाली भाषामा[१२] गर्न लगइयो ।

सर्वोच्च अदालतको निर्णयमा लेखिएको छ[१३]-

> *काठमाडौं नगरपालिकामा आधिकारिक भाषाका रूपमा नेपाल भाषालाई तथा राजविराज नगरपालिका र जिल्ला विकास समिति धनुषाले मैथिली भाषालाई पनि कामकाजमा प्रयोगमा ल्याउने भनी गरेका निर्णयहरु संविधानको धारा ६(१)को प्रतिकुल भएकाले उत्पेषणको आदेशद्वारा बदर हुने ठहर्छ । - फैसला मिति २०५६/२/१८/३*

---

११ जसरी Democracy शब्दको नेपालको सन्दर्भमा दुइवटा शब्द विकास भएका छन्- 'प्रजातन्त्र' र 'लोकतन्त्र' (यी दुवैको अर्थ एउटै रहेनन्) त्यसै गरी भाषा भनेको 'शासकीय भाषा' (नेपाली) हो र मातृभाषा भनेको नेपाली इतरका नेपालीभाषाद्वारा 'शासित भाषा' हुन् भन्ने अवधारणा विकास हुन थालेको आभास हुन्छ । नेपाल प्रज्ञा प्रतिष्ठान, पाठ्यक्रम विकास केन्द्र, शिक्षा विभाग, रेडियो नेपाल आदि संस्थाहरूमा मातृभाषा विभाग वा शाखा रहनुले पनि भाषा र मातृभाषा फरक हुन् भन्ने दर्साउँछ । नेपालमा भाषिक आन्दोलनहरूमातृभाषीहरूले गर्दै आइरहेका छन् र नेपाली भाषीहरू त्यस्ता आन्दोलनलाई जसरी पनि दवाउने, कुल्चने वा वितृष्णा उत्पन्न गराउने र मातृभाषीले सुविधा पाउने भएमा अग्रपंक्तिमा उपभोगको लागि सदा तम्तयार रहने गरेका उदाहरण पाइन्छन् ।

१२ "सर्वोच्च अदालतको पूर्ण इजलासले २०६६ भदौ ७ गते तत्कालीन उपराष्ट्रपति परमानन्द झालाई ७ दिनभित्र संविधान र अदालतको आदेश बमोजिम लिनु पर्ने शपथको कार्यक्रम गर्न अवसर दिने, अन्यथा सो पश्चात् नेपालको संविधानको धारा २०३६ झ (२) र अदालतको २०६६ श्रावण ९ गतेको आदेश बमोजिम कानून सम्मत शपथ नलिएको अवस्थामा उपराष्ट्रपतिको कार्यभार क्रियाशील रहेकोनमानिने भनी आदेश गरेको थियो ।" -अधिवक्ता दिपेन्द्र झाको कार्यपत्र भाषा आयोगको सम्वन्धमा व्यवस्था गर्न बनेको विधेयकमा केही सुझावबाट साभार

१३ गोपाल शिवाकोटी 'चिन्तन' (२०५९), 'भाषिक अधिकार सम्वन्धी मुद्दामा सर्वोच्च अदालतको निर्णय मानवअधिकार विपरित', *मानवअधिकार सम्वन्धी सर्वोच्च अदालतको फैसलाहरूको टिप्पणी* (११५-१२७) ।

जेहोस् मातृभाषी र भाषा अभियन्ताहरूको केही अपेक्षा २०४७ को संविधानमा प्रतिविम्बित भएको थियो । केही २०६३ र केही २०७२ को संविधानमा प्रतिविम्बित भएका छन् । किस्तावन्दीमा नै भए पनि प्रत्येक पटकको संविधानमा मातृभाषीहरूका अपेक्षाहरूलाई सम्वोधन गर्ने काम भएको छ । तर ती प्रावधानहरू कार्यान्वयन भए ? भन्ने प्रश्न उठने गर्दछ । कार्यान्वयनमा शंका रहिरह्यो र अझै त्यो कायमै छ । सेवाप्रदायकहरूको नियतमा शंका लाग्यो र अझै पनि छ । २०४७ को संविधानले व्यवस्था गरेका दुइटा प्रावधान, समयले तिन दसक पुग्न लाग्दा पनि राज्यले कार्यान्वयन गर्न आलटाल गरिरहेको छ, उदाहरणसहित राख्न चाहन्छु ।

(१) नेपाल अधिराज्यको संविधान २०४७ को धारा (४.१) मार्फत् 'बहुभाषिक' शब्दको प्रवेश भयो । 'एक भाषा एक भेष'को नीति स्थापित रहेको पृष्ठभूमिमा यो शब्दको प्रवेशलाई निकै क्रान्तिकारी फटको मान्नु पर्दछ । बहुभाषिकतले हाम्रो देशको यथार्थलाई प्रतिविम्वित गरेको छ । यस पछिका नेपालको अन्तरिम संविधान २०६३ को धारा (३)मा पनि यो प्रावधान छ र नेपालको संविधान २०७२ को प्रस्तावना र धारा (३) पनि यो प्रावधान रहेको छ । तर संविधानको यो प्रावधान ऐन कानुनमा पनि देखिनु पर्छ र कार्यान्वयनमा पनि प्रतिविम्बित हुनु पर्छ ।

तर 'बहुभाषिकता' शिक्षा ऐनको संशोधनमा देखा परेन । भाषा आयोग सम्वन्धि विधेयकमा पनि यो शब्द परेको छैन । यसबाट राष्ट्रसेवकहरू अझै 'बहुभाषिक' शब्दप्रति एलर्जिक रहेको अनुमान लगाउन सकिन्छ । संविधानलाई प्रष्ट पार्ने प्रमूख आधार ऐन कानुन नै हो र यसमा नभए पछि कसरी नियमावली र निर्देशिका प्रवेश गर्छ ? र निर्देशिका नभए सेवाप्रदायकले कसरी सेवा दिन सक्छ र आम नागरिकले राहत महशुस गर्न सक्छ ? संविधानलाई नै वेवास्ता गर्नेहरूले कसरी संविधान कार्यान्वयन गर्छन् होला ? यो निकै सोचनीय प्रश्न हुन सक्छ ।

(२) मातृभाषामा शिक्षाको व्यवस्था पनि २०४७ को संविधानले नै गरेको हो र यसपछिका दुबै संविधान (२०६३ र २०७२)ले पनि यसलाई निरन्तरता दिएका छन् । २७वर्षको यस अवधिमा बालअधिकारसम्वन्धी महासन्धीमा नेपालले हस्ताक्षर गऱ्यो ।[१४]

---

[१४] धारा ३०: 'जाति, धर्म वा भाषिक अल्पसङ्ख्यकहरु वा आदिवासी मूलका मानिसहरु बसोबास रहदै आएको राज्यमा त्यस्ता अल्पसङ्ख्यकहरु वा आदिवासी बालबालिकाहरूलाई आफ्नै समुदायका अन्य सदस्यहरूसँग सामुहिक रूपमा आफ्नो संस्कृति अपनाउने, धर्मको पालना गर्ने र प्रयोग गर्ने वा आफ्नो भाषा प्रयोग गर्ने अधिकारबाट वञ्चित गर्न पाइने छैन' (बाल अधिकारसम्वन्धी महासन्धी १९८९) ।

आइएलओ महासन्धी १६९[१५] र आदिवासी जनजातिको अधिकार सम्वन्धी अन्तर्राष्ट्रिय घोषणापत्र[१६] लगायतका सन्धी, महासन्धी, घोषणापत्रहरूमा पनि नेपालले हस्ताक्षर गरेर पक्ष-राष्ट्र बन्यो । यसै बीच सम्पन्न राष्ट्रिय तथा अन्तर्राष्ट्रिय तहका गोष्ठीहरूमा पनि नेपालले सक्रिय सहभागीता जनायो । सबैको लागि शिक्षा कार्यक्रम (२००१-२०१५) मा नेपालले छैठौं लक्ष्य[१७]तयार गरेर विश्वलाई चकित पाऱ्यो । मातृभाषामा शिक्षाको लागि अपूर्व तत्परता देखायो । तर व्यवहारिक रूपमा मातृभाषामा शिक्षा लागू गर्ने चासो नै देखाएन । बल्लतल्ल २०६३ मा कार्यान्वयन प्रारम्भ गरेको बहुभाषिक शिक्षा कार्यक्रम सकिने वित्तिकै अलपत्र मात्र पारेन, प्यारालाइसिस अवस्थामा नै पुऱ्याइ दियो । यस बीच सेवाप्रदायकहरूले धेरै नाटक पनि खेलेका छन् । कार्यान्वयन पक्ष फितलो मात्र होइन मातृभाषी बालबालिकाको अधिकार समेत खोसिएका छन् । संविधान, महासन्धी र घोषणापत्रहरूको खुल्लाम खुल्ला धज्जी उडाएका छन् ।

माथिका दुइ उदाहरणबाट हाम्रा राष्ट्रसेवक वा सेवाप्रदायहरूको गैरजिम्मेवारीपनाको राम्रो प्रदर्शन हुन्छ । उनीहरूको इमान्दारिता र नियतमाथि शंका उब्जिन्छ । नयाँ संविधानले व्यवस्था गरेका भाषिक अधिकारका प्रावधानहरू पनि कागजको खोष्टामा परिणत गर्न सक्छन् । यसप्रति अभियन्ताहरू सदा सतर्क रहनु आवश्यक छ ।

संविधानका प्रावधानलाई वास्तविकतामा बदल्न र मातृभाषाका संरक्षण र सम्वर्द्धन गर्न स्थानीय सरकारमा स्थानीय मातृभाषामा शिक्षा (बहुभाषिक शिक्षा पनि भनिन्छ) मात्र होइन, स्थानीय मातृभाषामा स्थानीय सरकारको कामकाज पनि गरिनु पर्दछ । दक्षिणी अफ्रिकी संविधानले पनि स्थानीय भाषाहरूलाई प्राथमिकता राखेको छ । यसै गरी चीनको संविधानले पनि स्थानीय समुदायमा अत्याधिक प्रयोग हुने मौखिक वा लेख्य भाषा स्थानीय सरकारी कामकाजको भाषा हुने व्यवस्था गरेको छ (धारा १२१) । अदालती प्रक्रियामा पनि मौखिक वा लेख्य भाषा जनअदालतमा प्रयोग

---

१५ धारा २८.३ : 'आदिवासी समुदायका मातृभाषाहरूको विकास र अभ्यासलाई संरक्षण र सम्वर्द्धन गर्ने उचित व्यवस्था मिलाइनेछ ।' ILO P 169

१६ धारा १३(१) : 'आदिवासी जनजातिसँग उनीहरूको आफ्नो इतिहास, भाषा, मौखिक परम्परा, दर्शन, लेखन प्रणाली तथा साहित्यहरु पुनर्जीवित गर्ने, प्रयोग गर्ने तथा भावी पुस्तालाई हस्तान्तरण गर्ने तथा समुदाय, स्थान र व्यक्तिहरूको आफ्नै नाम राख्ने र तिनलाई कायम राख्ने अधिकार छ ।'

१७ सबैको लागि शिक्षा कार्यक्रम (१००१-२०१५)को सातौं लक्ष्य: 'आदिवासी जनजाति र भाषिक अल्पसङ्ख्यक समुदायका लागि मातृभाषामा आधारभूत तथा प्राथमिक शिक्षा प्राप्त गर्न पाउने अधिकार सुनिश्चित गर्ने' तय गरिएता पनि मातृभाषामा शिक्षा दिन नेपाल हिच्किइ रह्यो ।

गर्ने पाइने अधिकारको व्यवस्था पनि गरेको छ । स्थानीय अदालतमा प्रयोग हुने भाषा बुझ्न नसकेको खण्डमा अदालतले अनुवादकको व्यवस्था गर्नेछ भनिएको छ [१८]यसैगरी स्थानीय तहमा हुने सुनुवाइ आदि कामकार्यावाही स्थानीय समुदायको बोलीचालीको भाषामा नै गरिने व्यवस्था पनि संविधानले गरेको छ (धारा १३४) ।

भाषाबारे गम्भिर चासो राख्दै स्थानीय स्तरमा मातृभाषाहरूको प्रयोग विस्तारमा जोड दिनु पर्छ र अति लोपोन्मुख भाषाका वक्तालाई नै बचाउने तर्फ उन्मुख हुन आवश्यक छ । किनकि भाषा राष्ट्रको सम्पदा हो, हाम्रो गौरव हो र पहिचानको आधार पनि हो ।

अर्को, भाषा हाम्रा प्रमूख मुद्दा पनि हो । यो हाम्रो अभियान हो । हाम्रो आन्दोलन हो । संघर्ष हो । यसमा हाम्रा पूर्खाका अकांक्षाहरू प्रतिबिम्बित छन् । शासकीय भाषाबाट मुक्ति हामीले चाहेका हौं । दमन हामी माथि भयो । अपमानित हामी भयौं । जेलनेल हामीले भोग्यौं । प्रतिफलमा प्राप्त संवैधानिक उपलब्धिहरू पनि हाम्रा हुन् । यसमा हाम्रा श्रम, शास्ती र कथाव्यथा छन् । लाठीका डामहरू प्रष्ट देखिन्छन् ती संवैधानिक प्रावधानहरूमा । यसर्थ उपलब्धिहरूको जगेर्ना गर्नु पनि हाम्रै काँधमा छ । हाम्रो उपलब्धिमा कक्टेल पार्टी गर्दै अधिकारको दुरूपयोग गर्न शासकीय भाषीहरू जुनसुकै बेला पनि तम्तयार हुनसक्छन् । प्रभूत्वशाली भाषीहरू मातृभाषा कार्यान्वयनमा आलटाल गर्न सक्छन् । मुद्दा मामिलामा फसाइरहन पनि सक्छन् । यसबारे चनाखो हुनु प्रत्येक मातृभाषी अभियन्ताहरूको दायित्व हो । सधैं सजग रहौं ।

ooo

---

१८ **Article 121 Autonomous language** : In performing their functions, the organs of self-government of the national autonomous areas, in accordance with the autonomy regulations of the respective areas, employ the spoken and written language or languages in common use in the locality. **Article 134 Language In Trails** (1) Citizens of all nationalities have the right to use the spoken and written languages of their own nationalities in court proceedings. The People's Courts and People's Procuratorates should provide translation for any party to the court proceedings who is not familiar with the spoken or written languages in common use in the locality. (2) In an area where people of minority nationality live in a compact community or where a number of nationalities live together, hearings should be conducted in the langua ge or languages in common use in the locality; indictments, judgments, notices, and other documents should be written, according to actual needs, in the language or languages in common use in the locality.

**तालिका १: भाषाका प्रमुख मुद्दा र संयुक्त राष्ट्र संघका संयन्त्र तथा विश्वका संविधानहरूमा भाषिक व्यवस्था**

| भाषाका प्रमुख मुद्दाहरू | संयुक्त राष्ट्र संघीय संयन्त्रहरूमा भाषिक व्यवस्था | विश्वका विभिन्न मुलकका संविधानहरूमा भाषिक व्यवस्था | नेपालको संविधानमा भाषिक व्यवस्था |
|---|---|---|---|
| १. भाषा नीति, भाषाको हैसियत र संरक्षण तथा सम्वर्द्धन | १. मातृभाषाको अभ्यासलाई संरक्षण र विकास गर्ने ।<br>२. भाषालाई पुर्नजीवन र पुस्तान्तरण गर्ने अधिकार ।<br>३. स्थान र व्यक्तिको नाम आफ्नै भाषामा राख्ने अधिकार ।<br>४. भाषिक विभेद गर्न नपाइने प्रावधान ।<br>५. मातृभाषालाई सम्मान दिनु पर्ने । | १. राष्ट्रिय भाषा<br>२. सबै भाषाप्रति समानताको नीति<br>३. प्रान्तमा दुइ/तीन भाषा प्रयोगको नीति<br>४. अल्पसंख्यकको भाषिक अधिकारको व्यवस्था<br>५. स्थानीय मौखिक वा लेख्य भाषा संरक्षण, विकास र प्रयोग गर्ने अधिकार<br>६. आदिवासीको लागि विशेष भाषिक अधिकारको व्यवस्था<br>७. भाषिक समानताको आधारमा नोट, पासपोर्ट, स्टाम्प आदि छाप्ने कार्य<br>८. संकेतिक भाषाको व्यवस्था । | १. बहुभाषिक राष्ट्र<br>२. राष्ट्रभाषा<br>३. राष्ट्रिय भाषा<br>४. नागरिकता लिन भाषा जान्नु पर्ने<br>५. समानताको हक६. मातृभाषाको संरक्षण र सम्वर्द्धन : |
| २. शिक्षामा भाषा | १. मातृभाषामा शिक्षाको व्यवस्था | १. शिक्षाको माध्यमको रूपमा स्थानीय मातृभाषाहरू । | मातृभाषामा शिक्षा |
| ३. प्रशासनमा भाषा | १. सरकारी तथा गैरसरकारी क्षेत्रमा विना हस्तक्षेप वा कुनै प्रकारको भेदभाव विना आफ्नो भाषा प्रयोग गर्न पाउने अधिकार । | १. सरकारी कामकाजको भाषा<br>२. स्थानीय निकाय र सरकारको भाषा<br>३. क्षेत्रीय प्रशासनमा क्षेत्रीय भाषा<br>४. राज्य राज्य एवं राज्य र संघवीचको सञ्चारमा भाषा<br>५. कानुनी तथा अध्यादेशको भाषा<br>६. राज्य भाषा<br>७. प्रान्तको भाषा । | १. सरकारी कामकाजको भाषा<br>२. स्थानीय निकाय तथा कार्यालयमा मातृभाषा । |
| ४. सूचना र सञ्चारमा भाषा | १. मातृभाषामा सूचना पाउने हकको व्यवस्था ।<br>२. मातृभाषामा सञ्चार सस्थाको स्थापना । | १. सञ्चारमा भाषा (अफगानिसतान) | |
| ५. अदालती भाषा | १. अभियुक्तलाई उसको आफ्नो भाषामा अभियोग थाहा पाउने र अदालतले प्रयोग गर्ने भाषा नबुझेमा निशुल्क भाषा सहयोगी राख्न पाउने व्यवस्था । | १. सर्वोच्च र उच्च अदालतको भाषा ।<br>२. स्थानीय सरकार र अदालतमा स्थानीय भाषा | |
| ६. व्यवस्थापिका प्रक्रियामा भाषा | | १. संसदीय प्रक्रियामा भाषा<br>२. संसदको भाषा<br>३. व्यवस्थापिकामा भाषा | व्यवस्थापिका सभामा भाषा |

| | | | |
|---|---|---|---|
| [illegible] भाषा आयोग | १. मातृभाषा सिक्न वा मातृभाषाको माध्यममा शिक्षा पाउने अधिकारको लागि राज्यले उचित व्यवस्था मिलाउने व्यवस्था ।<br>२. भाषिक अल्पसंख्यकको चाहना अनुरूपको राष्ट्रिय नीति तथा कार्यक्रमको योजना बनाउने र कार्यान्वयन गर्नु पर्ने व्यवस्था । | १. भाषा आयोगको र कार्यादेशको व्यवस्था । | भाषा आयोगको स्थापना । |
| [illegible] अन्य | १. भाषिक अल्पसंख्यकहरूलाई उसको आफ्नो भाषा प्रयोगमा बन्देज नलगाइने अधिकार<br>२. भाषिक अल्पसंख्यक वा आदिवासीजनजातिका बालबालिकाले आफ्नो भाषा प्रयोग गर्न पाउने अधिकारलाई निषेश गर्न नपाइने व्यवस्था ।<br>३. सरकारी कामकाजको भाषामा दक्षता बढाउन सरकारी सहयोगको व्यतस्था ।<br>४. भाषिक मुद्दाको दीगो व्यवस्थापनका लागि भाषा सम्वन्धी छुट्टै भागको व्यवस्थ । | १. पर्याप्त सुविधाको व्यवस्था (श्रीलङ्का)<br>२. भाषिक व्यवस्थालाई सहयोग<br>३. भाषाको परम्परागत प्रयोग, भाषा व्यवस्थापन र प्रयोग सम्वन्धी विशेष अधिकार४. भाषा छनौटको अधिकार (बेल्जियम) । | राज्यको दायित्व, राज्यका निर्देशक सिद्धान्तहरु र राज्यका नीतिहरुमा भाषा । |

**तालिका विकास**: अमृत योन्जन तामाङ, असार २०७३

# टिप्पणी

**• अधिवक्ता शंकर लिम्बु**

आदिवासी मानवअधिकारका हिसाबले भाषालाई मनोविज्ञानको पक्षबाट हेर्ने गरिन्छ । भाषा कलोनाइजेसनसित जोडिएको छ । जब एउटा भाषाले अर्कोलाई थिचोमिचो गर्छ, त्यो कोलोनाइजेशन हो । भाषाका आधारमा पनि डिस्क्रिमेनसन हुन्छ, त्यो नेपालमा छ । अमानवीय तरिकाले भाषा मारिन्छ । कालो मान्छे, पहाडमा पनि छौं तर मधेसीलाई किन विभेद गर्छौं ? त्यसैले भाषाका आधारमा पनि विभेद छ ।

भाषा संवेदनशील विषय हो । एसिमिलेसन यसअघिको नीति थियो, नेपालमा । एउटा भाषा जर्बजस्त बोल्न लगाउने नीति । अहिले बल्ल भाषिक बहुलताका आधारमा नीति हुनुपर्छ भनिएको छ ।

खस नेपाली बोल्नेचाहिं नेपाली हो । अरू भाषा बोल्ने नेपाली होइन भन्ने छ । जो अरू भाषा बोल्छ नेसन हो । कलोनाइजेसन अझै जारी छ । हेजेमोनीको कुरा छ । जसले नेपाली भाषा प्रष्टसँग बोल्न सक्छ, जस्तो कि सुवास नेम्बाङले नेपाली भाषा प्रष्ट बोल्न सक्छन् । तर उसलाई दोस्रो वर्गको ठानिन्छ । किनभने उसको मातृभाषा खसनेपाली होइन ।

किन भाषिक बहुलतामा जान सकेनौ ?बहुलताले नै बहुभाषिक समाजमा स्पेस क्लियर गर्छ । स्थानीय निकायमा मातृभाषा प्रयोग गर्दा जागीरमा पहुँच बढ्छ । भारतमा मातृभाषामा लोकसेवा दिन पाउने प्रावधान छ तर नेपालमा छैन । लोकसेवामा बाहुन, जनजाति र मधेसीले लेखेको छुट्टिन्छ । हुबहु खस बोल्नेले मात्र पास गर्छ । भाषाको आधारमा पहुँचको पक्षमा कमजोरी देखिन्छ । लोकसेवा, अनुवाद, जागीरका निम्ति मातृभाषाको पहुँच वा विस्तार हुनुपर्छ । जित-जितको अवस्था सिर्जना गर्न

…छन् । सोभियत संघ रसियन र स्पेनिसलाई छाडेर केही ड्र ब्याक पनि छन् । …पनि छन्।

भाषालाई जबरजस्ती लाद्ने काम गर्नु हुन्न । यसले त एथ्निक पोलोराइजेसन … । अहिले पनि संविधानले पोलोराइजेसन गरेको छ । पोलोराइजेसन रोक्ने … बहुलवादको मात्र होइन, भाषिक बहुलताको नीति जरूरी छ ।

भाषा आयोगको प्रसंग छ । आयोगले सुझावमात्र दिने हो । सुझावले नीति निर्माण गर्दैन । सरकारी आयोगले केही गर्न सक्दैन । थुप्रै आयोग छन् । ६ वटा आयोग छन् । त्यसमध्येको एउटा आयोग भाषा आयोग पनि हो । तर यो संवैधानिक आयोग हुँदै होइन ।

कोलोनाइजेसनका निम्ति एउटै जाति, एउटै भाषाको नीति थोरै परिवर्तन गरेर निरन्तरता दिइएको छ । २०४७ पछि सर्वोच्च अदालतको फैसला अहिले पनि यथावत् छ । त्यसले मातृभाषीको मुख बन्द गरिदिएको छ । स्पेस सिमित गरिदिएको छ । प्रतिनिधित्व सीमित छ । अदालतमा जहाँ आफ्नो कुरा भन्न सक्दैन, कमसेकम त्यस्तो अवस्थामा अनुवादक राखिदिन जरूरी हुन्छ । नत्र यसलेबंगलादेश बनेमा दुर्भाग्य हुनेछ ।

## सहभागीहरूबाट प्राप्त प्रतिक्रिया र सुझावहरू

### प्रा. डा. दानराज रेग्मी

- २०५० मा भाषा नीति सुझाव आयोग बन्यो । मुलुकको भाषा अध्ययन गर्ने सुझाव आयो । त्यसैअनुसार त्रिवि भाषाविज्ञान केन्द्रीय विभाग स्थापना भयो । भाषाविज्ञान विभगा हुनुपर्छ भन्नेमा अमृत योन्जन आफैं हुनुहुन्थ्यो ।
- अहिले आदिवासी जनजाति विद्यार्थीको पहुँच हुनुपर्छ भन्नेछ । तर आदिवासी जनजतिको मुभमेन्टमा लागेकाहरूको यतातिर प्रयास प्रष्ट देखिदैन । भाषाविज्ञान पढौं । पछाडि पऱ्यौं । भाषिकअध्ययनका निम्ति स्नातकोत्तर तहमा भाषिविज्ञान पढ्न जरूरी छ ।
- भाषिक नीति वा विषयमा प्रष्ट हुन जरूरी छ । सबैले नेपाली बोल्छौं । गाली गर्छौं नेपाली भाषालाई । दक्षिण भारतमा अंग्रेजी भाषाले प्रश्रय पायो । त्यही धारणा आए संघीयतामा नेपाली भाषा लाई प्राथमिकता नदिए नेपाली भाषा लोप हुनेछ । अंग्रेजीले ठाउँ लिनेछ । त्यो स्थितिको सिर्जना नहोस् ।

**सह-प्रा. डा. दुबिनन्द ढकाल**

- सीबीएसले स्पेनिस, अंग्रेजीलगायत राष्ट्रभाषा भनेको छ । स्थानीय भाषा पनि राष्ट्रभाषा भएका छन् । स्थानीय भाषाहरूको संवर्द्धन हुनु स्वागत योग्य कुरा हो ।
- सबै प्रदेशमा कुन कुन भाषाको स्थिति के छ भन्ने पनि कार्यपत्रमा आउन सकेको भए सुनमा सुगन्ध हुने थियो ।
- दक्षिण एसियाकोश्रीलंकामा पनि सुरूमा सबै भाषालाई स्थान दिइएको थिएन । पछि मात्र त्रमशः अरू भाषाहरूलाई स्थान दिइएको हो । बहुभाषिक मुलुकमा समस्या भाषिक जटिलता हटाउन भाषा आयोगलगायतका निकायबाट नीतिगत रूपमै जरूरी छ ।

**सुर्य यादव**

- यो भन्दा अघिको सविधान प्रष्ट थियो । राष्ट्रभाषा र राष्ट्रिय भाषा भनेको थियो । धारा सबैमा जडान हुने पानी चाहिँ सीमित धारामा मात्र आउने जस्तो भयो ।

**तिलक चाम्लिङ**

- भाषाविज्ञान विषयको पढाई अंग्रेजी माध्यममा नै किन हुनु पर्ने ?

**सोम धिमाल**

- प्रस्तुति धेरै राम्रो लाग्यो । जे कुरा पनि  कार्यान्वयनमा लैजान समस्या समस्या देखिन्छ । १-५ सम्मको पाठ्यक्रम र पाठ्यपुस्तक निर्माण गरियो तर न शिक्षक व्यवस्था हुन सक्यो न अरूश्रोत र साधन नै उपलब्ध गरायो ।
- कार्यान्वयनमा विद्यालय व्यवस्थापन समिति र प्रअको ठूलो हात रहँदो रहेछ ।

**डा. अम्बिका रेग्मी**

- समस्त जनजाति जो भाषाको लागि काम गर्नुभएको छ । भाषाको विकास गर्नका लागि शिक्षामा जोड दिनु पर्ने रहेछ ।
- धादिङमा तामाङ भाषामा पढाइ हुन्छ तर सम्भोटा लिपिको कारणले समस्या देखिएको छ । हाम्रो अनुरोध के हो भने  मातृभाषामा शिक्षा दिनु भनेको सहज प्रकारले भाषा सिकाउनु हो । लिपि नै चाहिन्छ भन्ने होइन ।

**भीमनारायण रेग्मी**

- भाषा आयोगका पदाधिकारीको योग्यता ठीकै छ । उमेर ४५ ठीकै छ । सबैतिर ६५ वर्ष छ, त्यसैले ठीक छ । कसरी समुदायको मान्छे त्यहाँ पुग्ने भन्ने छ ।
- धेरैवटा भाषिक समुदायका युवाहरू भाषाविज्ञानमा समर्पित छन् । शब्दकोशहरू धेरै प्रकाशनमा आएका छन् ।
- अहिले निर्वाचन र लोक सेवा आयोगले मात्र काम गर्छन् । बाँकीले काम गर्दैनन् ।

**तीर्थनाथ भट्टराई**

- संवैधानिक र सरकारी निकायमा स्पष्ट भइसकेको छ । संवैधानिक आयोगमा महाभियोग लाग्छ । भाषा आयोग सरकारी आयोग हो ।
- सम्बन्धित विषयमा स्नातकोत्तर भन्नु गल्ती हो । यो यो विषय हुनुपर्छ ।
- संविधानको २८७धारामा उल्लेख भएको भाषा आयोगको काम कर्तव्य र अधिकारमा संशोधन जरूरी छ ।

**डा. कर्णाखर खतिवडा**

- धिमाल भाषाको अवस्था चिन्ताजनक छ । धिमाल समुदायमा भाषा पुस्तान्तरण राम्ररी हुन सकिरहेको छैन ।
- धिमाल भाषामा प्रकाशित पत्रपत्रिकाबारे समुदायलाई थाहा छैन ।
- पाँच कक्षासम्म पाठ्यपुस्तक भएपनि एउटा स्कुलमा मात्र पढाइ भएको छ । त्यहाँका विद्यार्थीहरूमाले पढ्न चाहँदैनन् ।
- समुदायलाई सचेतना दिलाउन सरकार र समुदायको अगुवाको काम खट्किएको छ । हाम्रो भाषा बोल्ने हामीले नै हो भन्ने वातावरण बन्नु पर्छ ।

**प्रतिभा रेग्मी**

- कौश्राबारीमा तामाङ भाषाको माध्यमबाट पढाइ हुन्छ । त्यहाँ नेपाली भन्दा छिटो सिकिरहेका छन् । त्यहाँ समुदायको चासो छ । शिक्षक छैनन् ।
- मातृभाषामा शिक्षा आवश्यक छ किन ? मातृभाषामा शिक्षा दिएर के गर्नु ? अंग्रेजी सिकेमात्र कम्प्युटरमा काम र प्रतिस्पर्धा गर्न सक्छौ भन्ने पायौ । चेतनाको कमी छ ।

### शंकर लिम्बु

- यसलाई एउटै शब्दमा किन राज्यलाई कुरा गरिरहेका छौ भने सबै अ सरकारमा कानुन रहेको हुँदामात्र भनिरहेका छौ । यो स्ट्रक्चर सच्याउन भ हौं ।

### अमृत योन्जन

- धन्यवाद सबैलाई ।
- लिपि, भाषा के हो भन्ने छुट्टै हो । नीति कस्तो हुने हो भन्नेमात्रै चासो हो । स प्रमुख सकारात्मक भएमात्र राम्रो हुन्छ । नेगेटिभ भएर सकारात्मक काम सक्दैन ।
- ७ वटा संविधानमा काम भएन । आयोगका सुझावहरू थन्किएका छन् ।

# शिक्षामा मातृभाषाको प्रयोग[१९]

• प्राज्ञ अमर तुम्याहाङ

## मुख्य सार

नेपालको बहुभाषिकतालाई आत्मसात गर्दै **नेपालको संविधान**लेनेपालमा बोलिने सबै मातृभाषाहरु राष्ट्र भाषा हुन् भनी संवैधानिक मान्यता दिएको छ । यही परिप्रेक्ष्यमा नेपालमा बोलिने कुन कुन भाषाहरु शिक्षाका माध्यमका रुपमा प्रयोग भइआएका छन् ? यो बारेमा चर्चा गर्नु यस लेखको मुख्य ध्येय हो । शिक्षामा मातृभाषाको अर्थ, शिक्षामा मातृभाषा प्रयोग सम्बन्धी कानुनी प्रावधानहरु, उक्त प्रावधानका आधारमा विद्यालय र विश्वविद्यालयको औपचारिक शिक्षामा मातृभाषाको प्रयोगको अवस्था, अनौपचारिक शिक्षामा मातृभाषाको प्रयोग, मातृभाषा शिक्षामा भएका उपलब्धिको लेखाजोखा, व्यवहारमा देखिएका समस्याहरु र शिक्षामा मातृभाषा पठनपाठनमा सुधार ल्यानका लागि केही सुझावहरु यस लेखमा समावेश छन् ।

## शिक्षामा मातृभाषा

'मातृभाषा' भन्नाले बालबालिकाले आफ्नो घर परिवारमा बोल्ने पहिलो भाषालाई जनाउँछ (बहुभाषिक शिक्षा कार्यान्वयन निर्देशिका, २०६६ः २) । मातृभाषी विद्यार्थीहरुलाई अध्यापन गराउँदा उनीहरुकै मातृभाषामा पढाउने कार्य नै शिक्षामा मातृभाषाको प्रयोग हो । सिल र अन्य यादव र कँडेल (२०७३ः ?) ले 'शिक्षणका पूर्ण माध्यमका रुपमा मातृभाषा' प्रयोग गर्नुका साथै 'आवश्यकता अनुसारको मौखिक सहयोगका रुपमा मातृभाषा' को प्रयोग गर्नुपर्ने धारण अघि सारेका छन् ।

---

१९. (२०७३ असार २२ गते बुधबार आजउरा प्रतिष्ठानद्वारा आयोजित नेपालको राष्ट्रिय भाषा नीति तथा मातृभाषाको प्रयोग र विस्तार सम्बन्धी एक दिने गोष्ठीमा प्रस्तुत कार्यपत्र)

## शिक्षामा मातृभाषा प्रयोग सम्वन्धी कानुनी प्रावधान (संविधानदेखि ऐन, नियम विनियम)

शिक्षामा मातृभाषाको प्रयोगको व्यवस्था संविधानले व्यवस्था गरे अनुसार हु गर्दछ । संविधानले शिक्षामा मातृभाषाको प्रयोग निषेध गरे शिक्षामा मातृभाषाको प्रये हुँदैन । संविधानले शिक्षामा मातृभाषा प्रयोगको कुरो स्वीकार गरे यसको प्रयोग हुन्छ नेपालमा बनेका संविधानहरु मध्ये नेपालको अन्तरिम संविधान २०६३ शिक्षामा मातृभा प्रयोगका लागि सबै भन्दा उदार संविधान हो तर यो पूर्ण रुपमा कार्यान्वयन हुन सकेन

**नेपालको अन्तरिम संविधान २०६३** को भाग १ को धारा ५ मा 'नेपालमा बोलि सबै मातृभाषाहरु राष्ट्र भाषा हुन्' भनी सबै मातृभाषालाई समान संवैधानिक मान्य प्रदान गर्दै भाग ३ को मौलिक हकको शिक्षा तथा संस्कृति सम्वन्धी हकमा लेखिए छ : *प्रत्येक समुदायलाई कानुनमा व्यवस्था भए बमोजिम आफ्नो मातृभाषामा आधार शिक्षा पाउने हक हुनेछ ।* (धारा १७.१)

यसरी नै मातृभाषा शिक्षा बारेमा **नेपालको संविधान २०७२** को भाग ३ मौलिक हकको शिक्षा सम्बन्धी हकमा लेखिएको छ : *नेपालमा बसोबास गर्ने प्रत्ये नेपाली समुदायलाई कानुन बमोजिम मातृभाषामा शिक्षा पाउने र त्यसका ला विद्यालय तथा शैक्षिक संस्था खोल्ने र सञ्चालन गर्ने हक हुनेछ (धारा ३१.५) ।*

**नेपालको संविधान २०७२** को भाग ५ को राज्यको संरचना र राज्य शक्ति बाँडफाँडमा लेखिएको छ : *भाषा, लिपि, संस्कृति, ललितकला र धर्मको संरक्षण प्रयोग (धारा ५७ (२) को अनुसूचि ६ को १८, प्रदेशको अधिकारको सूचि) ।*

मातृभाषा शिक्षा सम्बन्धमा **शिक्षा ऐन २०२८ तथा नियमावली (२०६३ संशोधनसहि** मा '*प्राथमिक तहसम्मको शिक्षा मातृभाषामा दिन सकिनेछ ।*' भनी दफा ७.२ (ख) उल्लेख भएको छ ।

यसरी नै **स्थानीय स्वायत्त शासन ऐन २०५५ र निमयावली २०५६** मा मातृभा शिक्षाका लागि निम्न व्यवस्थाहरु भएका थिए ।

*गाउँ विकास क्षेत्रभित्र मातृभाषामा प्राथमिक तहको शिक्षा उपलब्ध गरा सहयोग गर्ने ।*' दफा २८घ(३)

- *विभिन्न भाषा, धर्म र संस्कृतिको संरक्षण गर्ने, गराउने र तिनीहरु विकासमा सहयोग गर्ने* दफा २८झ(२)

- *नगरपालिका क्षेत्रभित्र मातृभाषामा प्राथमिक तहको शिक्षा उपलब्ध गराउन सहयोग गर्ने ।'* दफा ९६घ(३)

राष्ट्रिय पाठ्यक्रम प्रारूप (२०६३)ले माध्यम भाषाको बारेमा निम्न कुरा उल्लेख गएको छ

- 'आधारभूत शिक्षाको माध्यम मातृभाषा हुनेछ । आधारभूत शिक्षाको प्रथम चरण (कक्षा १-३) सम्म सामान्यतया शिक्षाको माध्यम मातृभाषा हुनेछ ।' (पृ. २८)

तीन वर्षीय अन्तरिम योजना (२०६४/६५-२०६६/६७) मा शिक्षाको माध्यम भाषाका विषयमा निम्न प्रावधानहरु उल्लेख गरेको छ :

- *'मातृभाषाहरूको माध्यमबाट शिक्षा दिने पद्धतिलाई संस्थागत गर्ने ।'* (पृ. १२०)
- *'मातृभाषामा प्राथमिक शिक्षा पाउने अधिकारको सुनिश्चितताको लागि मागको आधारमा कार्यक्रम विस्तार गर्दै लगिनेछ ।'* (पृ. २६१)

शिक्षामा मातृभाषाको प्रयोगका सम्बन्धमा संवैधानिकदेखि ऐन, नियम, विनियममा विभिन्न व्यवस्था भएका छन् । तर ती व्यवस्थाको मर्म अनुसार व्यवहारतः शिक्षामा मातृभाषाको प्रयोग हुन सकिरहेको छैन ।

## शिक्षामा मातृभाषा प्रयोगको अवस्था

शिक्षामा मातृभाषा प्रयोगको अवस्था बारेमा छलफल गर्दा विद्यालय शिक्षा र उच्चशिक्षा दुवैलाई समेटेर हेर्नु सान्दर्भिक हुन्छ । विद्यालय शिक्षा भन्नाले कक्षा १-१२ र उच्च शिक्षा भन्नाले स्नातकदेखि माथिको शिक्षालाई बुझ्नु पर्दछ ।

पुनरसंरचित नेपालको विद्यालय शिक्षालाई कक्षा १-१२ सम्म हुने गरी व्यवस्था गरिएको छ । यस अनुसार १-२ वर्षसम्मको बाल विकास शिक्षा, कक्षा १-८ को आधारभूत शिक्षा र कक्षा ९-१२ को माध्यमिक शिक्षा (नेपालमा विद्यालय शिक्षाका लागि राष्ट्रिय पाठ्यक्रम प्रारूप, २०६३ः ४६) को विद्यालय शिक्षाको संरचनात्मक प्रबन्ध भएको छ । आधारभूत तहलाई पनि आधारभूत तह कक्षा १-५ र आधारभूत तह कक्षा ६-८ को व्यवस्था गरिएको छ । यही संरचना अनुसार विद्यालय शिक्षामा मातृभाषा शिक्षाको व्यवस्था गरिएको छ ।

विद्यालय शिक्षामा प्रयोगमा रहेको मातृभाषा शिक्षालाई विद्यालय तहमा साधारण शिक्षा समूह र परम्पागत शिक्षा समूहमा विभाजन गरिएको पाइन्छ । यी दुवै समूह औपचारिक शिक्षाको रूपमा रहेका छन् ।

## साधारण शिक्षा समूहका लागि पाठ्यक्रम तथा मार्गदर्शन पुस्तिका निर्माण

मातृभाषा शिक्षा प्रयोगका लागि आवश्यक पाठ्यक्रम तथा पाठ्य पुस्तक विकासका लागि मार्गदर्शन पुस्तिका निर्माण भएका छन् । मातृभाषा शिक्षाको पाठ्यक्रम तथा पाठ्य पुस्तक विकासका लागि आधारभूत तह (कक्षा १–५) मार्गदर्शन पुस्तिका वि. सं. २०६४ मा निर्माण भई कार्यान्वयनमा रहेको छ । आधारभूत तह (कक्षा ६–८) को मातृभाषा शिक्षाको पाठ्यक्रम तथा पाठ्य पुस्तक विकासका लागि मार्गदर्शन पुस्तिका वि.सं. २०७० मा निर्माण भए छ ।

कक्षा ९–१० मा नेपालका राष्ट्रभाषाहरु र परम्परागत धार्मिक शिक्षामा प्रयोग हुने मातृभाषाको पठन पाठनका लागि व्यवस्था भएको छ भने जिल्ला पाठ्यक्रम समन्वय समिति र क्षेत्रीय पाठ्यक्रम समन्वय समितिका कार्यव्यवस्था निर्देशिका २०६१ (पहिलो संशोधन २०६८) निर्माण तथा कार्यान्वयनमा रहेको छ । यसका साथै मातृभाषा शिक्षा कार्यान्वयन निर्देशिका २०६६ निर्माण भएको छ ।

## परम्परागत धार्मिक शिक्षा समूहका लागि पाठ्यक्रम

औपचारिक शिक्षा प्रणाली बाहिर रहेका तर आफ्नै स्रोत साधान र शिक्षण प्रक्रियाका माध्यमबाट शिक्षा प्रदान गरिरहेका गुम्बा, गुरूकुल, मदरसा र मुन्धुम शिक्षा प्रणालीलाई राष्ट्रिय शिक्षा प्रणालीमा समाहीकरण गर्न र सबैका लागि शिक्षाको लक्ष्य पूरा गर्न शिक्षा मन्त्रालयले गुम्बा, गुरूकुल, मदरसा र मुन्धुम शिक्षा प्रणालीलाई मूल धारमा समाहीकरण गर्ने कार्यक्रम अगाडि सारेको छ । यही कार्यक्रम अनुसार मदरसा शिक्षाको पाठ्यक्रम आधारभूत तह कक्षा १–५ (२०६८), गुरूकुल शिक्षाको पाठ्यक्रम प्राथमिक तह कक्षा १–५ (२०६५), गोन्पा (गुम्बा) शिक्षाको पाठ्यक्रम प्राथमिक तह कक्षा १–५ (२०६५) र मुन्धुम शिक्षाको पाठ्यक्रम प्राथमिक तह कक्षा १–५ (२०७२) निर्माण भई कार्यान्वयनमा रहेको छ । यसरी नै संस्कृत र वेदविद्याश्रम माध्यमिक विद्यालय कक्षा ९ र १० (२०६८) पाठ्यक्रम निर्माण भएको छ भने कक्षा ९-१२ को पाठ्यक्रम संरचना २०६९ मा गुरूकुल, मदरसा र गोन्पा शिक्षाको पाठ्यक्रमको व्यवस्था गरिएको छ ।

## शिक्षामा मातृभाषा

शिक्षामा मातृभाषा भन्नाले (क) शिक्षाको माध्यमको रुपमा मातृभाषा र (ख) विषयको रुपमा मातृभाषा (बहुभाषिक शिक्षा कार्यान्वयन निर्देशिका २०६६: ३) बुझिन्छ ।

शिक्षाको माध्यमको रूपमा मातृभाषा भन्नाले भाषा विषय (नेपाली र अङ्ग्रेजी) बाहेकका अरू विषयको शिक्षण सिकाइको माध्यम भाषा सामान्यतया स्थानीय भाषा हुने छ भनिए तापनि यो औपचारिक र समग्र रूपमा व्यवहारमा लागू भएको अवस्था छैन । विषयका रूपमा आधारभूत तह कक्षा १-५ का लागि २०५५ देखि निम्न भाषाका पाठ्यपुस्तकहरू निर्माण गरी छापिँदै आएका र छिटफुट रूपमा पठनपाठन भइआएको पाइन्छ ।

२०५५ देखि २०७४ असार सम्ममा यसरी तयार भएका पाठ्यपुस्तकहरूमा १. मैथिली (कक्षा १–५), २. भोजपुरी (कक्षा १–५), ३. अवधी (कक्षा १–५), ४. तामाङ (कक्षा १–५), ५. लिम्बु (कक्षा १–५), ६. बान्तावा राई (कक्षा १–५), ७. चाम्लिङ राई (कक्षा १–५), ८. सेर्पा (कक्षा १–५), ९. गुरुङ (कक्षा १–५), १०. मगर (कक्षा १–५), ११. नेवार (नेपाल भाषा) (कक्षा १–५), १२. थारु (कक्षा १–५), १३. सुनुवार (कक्षा १–५), १४. राजबंशी (कक्षा १–५), १५. याक्खा (कक्षा १–५), १६. मुगाली (कक्षा १–५), १७. थारु (मध्य क्षेत्र) (कक्षा १–५), १८. तामाङ (सम्भोटा) (कक्षा १–५), १९. धिमाल (कक्षा १–५), २०. मगर (अठार मगरात) (कक्षा १–५), २१. बज्जिका (कक्षा १–५), २२. कुलुङ (कक्षा १–४), २३. चेपाङ (कक्षा २), २४. खालिङ राई (कक्षा २) र २५. म्वचथि न्चबमभ च्यबमष्लन एचयनचक ९भ्न्द्य० का आधारमा निर्माण भएको राना थारु भाषा (कक्षा १) रहेका छन् ।

पाठ्यपुस्तकबाट प्राप्त हुन नसकेका पाठ्यक्रमका उद्देश्यलाई प्राप्त गरी आफ्नो ज्ञान, सीप वा अभिवृत्तिको विकास गर्न प्राथमिक तहका विद्यार्थीहरू सक्षम होऊन् र अन्ततः व्यक्तिमा अन्तर्निहित प्रतिभाको प्रस्फुटन भइ सिर्जनशील नागरिकको विकास हुन सकोस् भन्ने मूल उद्देश्य (बालबोध-३६, २०५९: ग) राखेर बाल सन्दर्भ सामग्रीहरू पाठ्यक्रम विकास केन्द्रले निर्माण गर्ने गरेको छ । यसै क्रममा प्रत्येक मातृभाषामा कथा, जीवनी र संस्कृति गरी तिन तिन वटा बाल सन्दर्भ सामग्री पाठ्यक्रम विकास केन्द्रबाट बनेका छन् । यसरी बनेका बाल सन्दर्भ सामग्रीहरू १. मैथिली २. भोजपुरी, ३. लिम्बु, ४. थारु, ५. अवधी, ६. मगर, ७. नेवार (नेपाल भाषा), ८. डोटेली, ९. थकाली, १०. चाम्लिङ राई, ११. गुरुङ, १२. सेर्पा, १३. बान्तावा राई, १४. उर्दू र १५. संस्कृत भाषाका रहेका छन् ।

## मदरसामा धार्मिक शिक्षा : विद्यालय तह

मदरसा शिक्षाको पाठ्यक्रम आधारभूत तह कक्षा १-५ (२०६५: ३) अनुसार मदरसा शिक्षा कक्षा १-३ र कक्षा १-५ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

## मदरसा शिक्षा प्राथमिक/आधारभूत तह : कक्षा १–३

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | सामाजिक अध्ययन (उर्दू भाषामा) | ३ | ५० |
| २. | दिनियात | ४ | १०० |
| ३. | अरेबिक भाषा | ३ | ५० |
| ४. | उर्दू भाषा | ३ | ५० |

*नोट : यस तालिकामा नेपाली (पाठ्यभार ५ र पूर्णाङ्क १००), अङ्ग्रेजी (पा.भा. ४, पू. ५०), गणित (पा.भा.६, पू. १००) र विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा (पा.भा. ६, पू. १००) समावेश गरिएका छैनन् ।*

## मदरसा शिक्षा प्राथमिक/आधारमूत तह : कक्षा ४–५

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | सामाजिक अध्ययन (उर्दू भाषामा) | ४ | ५० |
| २. | दिनियात | ६ | १०० |
| ३. | अरेबिक भाषा र उर्दू भाषा | ७ | १०० (५०+५०) |

*नोट : यस तालिकामा नेपाली (पा.भा. ५ र पू. १००), अङ्ग्रेजी (पा.भा. ४, पू. ५०), गणित (पा.भा.६, पू. १००) र विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा (पा.भा. ६, पू. १००) समावेश गरिएका छैनन् ।*

नेपाल सरकार शिक्षा मन्त्रालयको मिति २०७०/०१/२१ को निर्णय अनुसार परीक्षणका लागि स्वीकृत कक्षा ९-१२ को पाठ्यक्रम संरचना (२०६९: ७-८) अनुसार परम्परागत धार्मिक शिक्षा समूह अन्तरगत मदरसा शिक्षा कक्षा ९-१० र कक्षा ११-१२ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

## मदरसा शिक्षा कक्षा ९–१०

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | सामाजिक अध्ययन (अनुकुलन गरी पठनपाठन गराइने) | ५ | १०० |
| २. | अरेबिक भाषा र साहित्य | ५ | १०० |
| ३. | अरेबिक व्याकरण | ५ | १०० |
| ४. | उर्दू साहित्य र व्याकरण | ५ | १०० |
| ५. | दिनियात | ५ | १०० |

*नोट : यस तालिकामा नेपाली (पा.भा. ५, पू. १००), गणित (पा.भा. ५, पू. १००) र अङ्ग्रेजी (पा.भा. ५, पू. १००) समावेश गरिएका छैनन् ।*

## मदरसा शिक्षा कक्षा ११–१२

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | अकिदा | ५ | १०० |
| २ | फिका र असुले फिका | ३ | ५० |
| ३ | मिरास विज्ञान | ३ | ५० |
| ४ | हदिस र असुले हदिस | ५ | १०० |
| ५ | कुर्‌आन | ५ | १०० |
| ६ | अरेबिक व्याकरण र साहित्य | ५ | १०० |

नोट: *यस तालिकामा नेपाली (पा.भा. ३, पू. ५०) र अङ्ग्रेजी (पा.भा. ५, पू. १००) समावेश गरिएका छैनन् ।*

## गोन्पा (गुम्बा) शिक्षा

गोन्पा (गुम्बा) शिक्षाको पाठ्यक्रम आधारभूत तह कक्षा १-५ (२०६५: ३) अनुसार गोन्पा (गुम्बा) शिक्षा कक्षा १-३ र कक्षा ४-५ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

## गोन्पा (गुम्बा) शिक्षा प्राथमिक/आधारभूत तह : कक्षा १–३

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | सामाजिक अध्ययन तथा सिर्जनात्मक कला | ६ | १०० |
| २ | स्थानीय विषय – भोट भाषा | ६ | १०० |

नोट: *यस तालिकामा नेपाली (पा.भा. ६ र पू. १००), अङ्ग्रेजी (पा.भा. ५, पू. १००), गणित (पा.भा.६, पू. १००), विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा (पा.भा. ५, पू. १००) समावेश गरिएका छैनन् ।*

## गोन्पा (गुम्बा) शिक्षा प्राथमिक/आधारभूत तह : कक्षा ४–५

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | सामाजिक अध्ययन | ५ | ७५ |
| २ | सिर्जनात्मक कला | ३ | २५ |
| २ | स्थानीय विषय – भोट भाषा | ६ | १०० |

नोट: *यस तालिकामा नेपाली (पा.भा. ६ र पू. १००), अङ्ग्रेजी (पा.भा. ५, पू. १००), गणित (पा.भा.६, पू. १००), विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा (पा.भा. ८, पू. १००) समावेश गरिएका छैनन् ।*

नेपाल सरकार शिक्षा मन्त्रालयको मिति २०७०/०१/२१ को निर्णय अनुसार परीक्षणका लागि स्वीकृत कक्षा ९-१२ को पाठ्यक्रम संरचना (२०६९: ८-९) अनुसार परम्परागत धार्मिक शिक्षा समूह अन्तरगत गोन्पा शिक्षा कक्षा ९-१० र कक्षा ११-१२ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

## गोन्पा शिक्षा कक्षा ९–१०

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | भोट भाषा वा पाली भाषा | ५ | १०० |
| २. | सामाजिक अध्ययन (अनुकुलन गरी पठनपाठन गराइने) | ५ | १०० |
| ३. | वौद्ध शिक्षा | ५ | १०० |
| ४. | ऐच्छिक पहिलो | ५ | १०० |
| ५. | ऐच्छिक दोस्रो | ५ | १०० |

*नोट : यस तालिकामा नेपाली (पा.भा. ५, पू. १००) र गणित (पा.भा. ५, पू. १००) र विज्ञान (पा.भा. ५, पू. १००) समावेश गरिएका छैनन् ।*

## ऐच्छिक विषय समूह

**ऐच्छिक पहिलो पत्र** : ज्योतिष, वैषज्य, शिल्पविद्या, बौद्ध कर्मकाण्ड र कम्प्युटरमध्ये कुनै एक ।

**ऐच्छिक दोस्रो पत्र** : अङ्ग्रेजी, जापानिज, पाली, भोटभाषा र संस्कृतमध्ये कुनै एक । (क्र.सं. १ मा लिइएको विषय नदोहोरिने गरी छनोट गर्नुपर्ने, पाठ्यवस्तु चाहिँ समान रहने ।)

## गोन्पा शिक्षा कक्षा ११–१२

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | भोट भाषा (साहित्य र व्याकरण सहित) वा पाली भाषा | ५ | १०० |
| २. | सामाजिक अध्ययन (अनुकुलन गरी पठनपाठन गराइने) | ३ | ५० |
| ३. | बौद्ध दर्शन | ५ | १०० |
| ४. | ज्योतिष वा वैषज्य वा शिल्प विद्या वा बौद्घ कर्मकाण्ड वा कम्प्युटर | ५ | १०० |
| ५. | बौद्ध धर्म | ५ | १०० |
| ६. | अन्तर्राष्ट्रिय/शास्त्रीय भाषा (अङ्ग्रेजी वा जापानिज वा चाइनिज वा भोट भाषा वा पाली वा संस्कृत) (क्र.सं. १ मा दिइएको विषय नदोहोरिने गरी छनोट गर्नु पर्ने, पाठ्यवस्तु चाहिँ समान रहने ।) | ५ | १०० |

*नोट : यस तालिकामा नेपाली (पा.भा. ३, पू. ५०) र गणित (पा.भा. ३, पू. ५०) समावेश गरिएका छैनन् ।*

## गुरूकुल शिक्षा

गुरूकुल शिक्षाको पाठ्यक्रम आधारभूत तह कक्षा १-५ (२०६५: ३) अनुसार गुरूकुल शिक्षा कक्षा १-३ र कक्षा ४-५ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

### गुरूकुल शिक्षा प्राथमिक/आधारभूत तह : कक्षा १–३

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | सामाजिक अध्ययन तथा सिर्जनात्मक कला | ६ | १०० |
| २ | संस्कृत रचना | ६ | १०० |

नोट: यस तालिकामा नेपाली (पा.भा. ६ र पू. १००), अङ्ग्रेजी (पा.भा. ५, पू. १००), गणित (पा.भा.६, पू. १००), विज्ञान, स्वास्थ्य र शारीरिक शिक्षा (पा.भा. ५, पू. १००) समावेश गरिएका छैनन् ।

### गुरूकुल शिक्षा प्राथमिक/आधारभूत तह : कक्षा ४–५

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | अङ्ग्रेजी/संस्कृत रचना | ५ | १०० |
| २ | सामाजिक अध्ययन | ५ | ७५ |
| ३ | सिर्जनात्मक कला | ३ | २५ |
| ४ | संस्कृत व्याकरण | ४ | ५० |
| ५ | सदाचार शिक्षा (नित्यकर्म) | ४ | ५० |
| ६ | वेद/नीतिशास्त्र (स्थानीय विषय) | ६ | १०० |

नोट: यी तालिकामा नेपाली (पा.भा. ६, पू. १००) र गणित (पा.भा. ६, पू. १००) समावेश गरिएका छैनन् ।

माध्यमिक शिक्षा पाठ्यक्रम २०६८ अनुसार संस्कृत माध्यमिक शिक्षालाई संस्कृत र वेदविद्याश्रम माध्यमिक विद्यालय (पृ. ५-६) मा विभाजन गरिएको थियो । नेपाल सरकार शिक्षा मन्त्रालयको मिति २०७०/०१/२१ को निर्णय अनुसार परीक्षणका लागि स्वीकृत कक्षा ९-१२ को पाठ्यक्रम संरचना (२०६९: ६-७) अनुसार परम्परागत धार्मिक शिक्षा समूह अन्तरगत गुरूकुल शिक्षा कक्षा ९-१० र कक्षा ११-१२ गरी दुई खण्डमा निम्न अनुसार विभाजन गरिएको पाइन्छ ।

### गुरूकुल शिक्षा कक्षा ९–१०

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | संस्कृत रचना वा अङ्ग्रेजी | ५ | १०० |
| २ | सामाजिक अध्ययन (अनुकुलन गरी पठनपाठन गराइने) | ५ | १०० |
| ३ | संस्कृत व्याकरण | ५ | १०० |
| ४ | ऐच्छिक पहिलो | ५ | १०० |
| ५ | ऐच्छिक दोस्रो | ५ | १०० |
| ६ | ऐच्छिक तेस्रो | ५ | १०० |

नोट: यस तालिकामा नेपाली (पा.भा ५, पू. १००) र गणित (पा.भा ५, पू. १००) समावेश गरिएका छैनन् ।

## ऐच्छिक विषय समूह

**ऐच्छिक पहिलो पत्र** : ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, नीतिशास्त्र ।

**ऐच्छिक दोस्रो पत्र** : सिद्धान्त ज्योतिष, नव्य व्याकरण, संस्कृत साहित्य, न्याय ।

**ऐच्छिक तेस्रो पत्र** : कर्मकाण्ड, फलित ज्योतिष, आयुर्वेद, योग शिक्षा, प्राकृतिक चिकित्सा, वास्तुशास्त्र ।

## गुरुकुल शिक्षा कक्षा ११–१२

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | संस्कृत रचना वा अङ्ग्रेजी | ५ | १०० |
| २. | सामाजिक अध्ययन (अनुकुलन गरी पठनपाठन गराइने) | ३ | ५० |
| ३. | संस्कृत भाषा | ३ | ५० |
| ४. | ऋग्वेद वा यजुर्वेद वा सामवेद वा अथर्ववेद वा नीतिशास्त्र | ५ | १०० |
| ५. | सिद्धान्त ज्योतिष वा नव्य व्याकरण वा संस्कृत साहित्य वा न्याय | ५ | १०० |
| ६. | संस्कृत व्याकरण | ५ | १०० |
| ७. | कर्मकाण्ड वा फलित ज्योतिष वा आयुर्वेद वा योग वा परम्परागत चिकित्सा पद्धति | ५ | १०० |

*नोट : यस तालिकामा नेपाली (पा.भा. ३, पू. ५०) समावेश गरिएको छैन ।*

त्रिभुवन विश्वविद्यालयबाट प्रवीणता प्रमाणपत्र तह फेज आउट भएपछि माध्यमिक तहको कक्षा ११ र १२ मा प्रवीणता प्रमाणपत्र तहमा पठन पाठन भएका मैथिली र नेपाल भाषा पठन पाठन हुन थालेका हुन् । यी विषयहरु माध्यमिक तहको कक्षा ११ र १२ मा निम्न अनुसार पठन पाठन भइआएका छन् ।

## उच्च माध्यमिक तहमा मातृभाषा शिक्षा : कक्षा ११

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १. | ऐच्छिक नेपाल भाषा (भाषा, पद्य व नाटक) | १५० | १०० |
| २. | ऐच्छिक मैथिली (व्याकरण, रचना, लिपि एवम् कथा साहित्य) | १५० | १०० |

*नोट: ऐच्छिक नेपाली, अङ्ग्रेजी, जापानिज, जर्मन, फ्रेन्च, उर्दू, हिन्दी समावेश गरिएको छैन ।*

## उच्च माध्यमिक तहमा मातृभाषा शिक्षा : कक्षा १२

| क्र.सं. | विषय | पाठ्यभार | पूर्णाङ्क |
|---|---|---|---|
| १ | ऐच्छिक नेपाल भाषा (गद्य व साहित्य परिचय) | १५० | १०० |
| २ | ऐच्छिक मैथिली (पद्य एवम् रूपक साहित्य) | १५० | १०० |

*नोट: तालिकामा अनिवार्य विषयहरूका साथै अन्य ऐच्छिक भाषा विषयहरु नेपाली, अङ्ग्रेजी, जापानिज, जर्मन, फ्रेन्च, उर्दू, हिन्दी समावेश गरिएको छैन ।*

## उच्च शिक्षामा मातृभाषा अध्ययन अध्यापन

त्रिभुवन विश्वविद्यालयमा दर्जन बढी अन्तर्राष्ट्रिय र शास्त्रीय भाषाहरु पठन पाठन भए पनि नेपाली माटोका भाषाहरूमा मैथिली र नेपाल भाषा मात्र पठन पाठन भइआएका छन् । यी भाषाहरु पनि पञ्चायत प्रजातन्त्र पुनरप्राप्ति पूर्वबाट पठनपाठन भइआएका हुन् । संस्कृत विश्वविद्यालयमा भने गणतन्त्र प्राप्तिपछि लिम्बु र थारु भाषाका पाठ्यक्रम निर्माण भएका छन् ।

## उच्च शिक्षामा मातृभाषा : त्रिभुवन विश्व विद्यालय

| क्र.सं. | विषय | पढाइ हुने तह |
|---|---|---|
| १ | नेपाल भाषा | स्नातकदेखि स्नातकोत्तर सम्म |
| २ | मैथिली | स्नातकदेखि स्नातकोत्तर सम्म |

## उच्च शिक्षामा मातृभाषा : नेपाल संस्कृत विश्व विद्यालय

| क्र.सं. | विषय | पढाइ हुने तह |
|---|---|---|
| १ | लिम्बु भाषा | उत्तर मध्यमा |
| २ | थारु भाषा | उत्तर मध्यमा |

*नोट: पाठ्यक्रम बने पनि औपचारिक रूपमा पठनपाठन आरम्भ भएको छैन ।*

## शिक्षामा मातृभाषा (अनौपचारिक शिक्षा)

अनौपचारिक शिक्षा केन्द्रले मैथिली, भोजपुरी, अवधि, थारु, लिम्बु, बान्तावा राई लगायत १४ वटा मातृभाषामा पाठ्यपुस्तक र सहयोगी पुस्तक प्रकाशन गरेको छ र [illegible] पठन पाठन पनि भइरहेको छ ।

## मातृभाषा शिक्षा : माध्यमको रूपमा र विषयको रूपमा

शिक्षामा प्रयोग भइरहेको मातृभाषा शिक्षालाई माध्यमको रूपमा र विषयको रूपमा [illegible] अनुसार विभाजन गरिएको पाइन्छ ।

## माध्यमको रूपमा शिक्षामा मातृभाषा

शिक्षा विभागले २०६३ देखि नेपालका आठ वटा मातृभाषाहरु (१. राना थारु, २. पाल्पा मगर, ३. रसुवा तामाङ, ४. आठपहरिया, ५. उराव, ६. पूर्वीय थारु, ७. सन्थाल, ८. राजवंशी) मा बहुभाषिक शिक्षा अर्थात् मातृभाषा माध्यम भाषाको रूपमा शिक्षण गर्ने आरम्भ गरी २०१५ सम्ममा ७५०० विद्यालयमा मातृभाषा माध्यममा पठन पाठन गर्ने योजना नेपाल सरकारको भए पनि यसले कुनै गति लिन सकेन ।

## विषयको रूपमा मातृभाषा शिक्षा

आधारभूत तह, माध्यमिक तह, उच्च माध्यमिक तह र विश्व विद्याल तहमा पठनपान हुने माथि उल्लेखित सम्पूर्ण औपचारिक शिक्षाका विषयहरु मातृभाषा विषयका रूपमा पठन पाठन हुने मातृभाषाहरु हुन् ।

## मातृभाषा शिक्षामा भएका उपलब्धिको लेखाजोखा

त्रिभुवन विश्वविद्यालयमा मैथिली र नेपाल भाषाको पठन पाठन पञ्चायत कालदेखि नै सुरु भएको हो । २०४६ सालको जनआन्दोलन पछि पुनरस्थापित प्रजातन्त्र, २०६२/६३ को लोकतान्त्रिक गणतन्त्र स्थापित गर्ने युगान्तकारी आन्दोलनपछि भएको आमूल परिवर्तनपछि त्रिभुवन विश्व विद्यालयले कुनै पनि मातृभाषामा शिक्षा दिने काम गरेको पाइएको छैन । यसरी नै अङ्ग्रेजी, उर्दू, चिनियाँ, जर्मन, कोरियन, स्पेनिस, मलाया, संस्कृत, भोटभाषा, अरेबिक, जापानिज, बङ्गाली, हिब्रू, हिन्दी जस्ता अन्तर्राष्ट्रिय र शास्त्रीय भाषाहरु माध्यमिक तहमा पञ्चायत कालदेखि नै पठन पाठन भइआएका थिए । नेपालकाराष्ट्र भाषाहरु मध्ये मैथिली र नेपाल भाषा पनि पञ्चायत कालदेखि नै पठन पाठन हुँदै आएका हुन् । २०४६ को प्रजातन्त्रको पुनरस्थापना पछि आधारभूत तहमा शिक्षामा मातृभाषाको प्रयोग आरम्भ भएर २०७४ सम्ममा २५ वटा मातृभाषामा अध्ययन अध्यापन गर्न गराउनका लागि पाठ्य पुस्तक तयार गर्ने काम भएको छ । आश्चर्यको विषय के भने २०४६ को प्रजातन्त्रको पुनरस्थापना र २०६२/६३ को जनआन्दोलन पछि मुलुक लोकतान्त्रिक गणतन्त्रमा प्रवेश गरे पनि माध्यमिक तहको शिक्षामा थप मातृभाषाको प्रयोग आरम्भ भएको देखिएको छैन । यसर्थ आधारभूत तहको शिक्षामा मातृभाषाको प्रयोग केही मात्रामा भए पनि माध्यमिक तह र उच्च शिक्षामा राष्ट्र भाषाहरु अर्थात् मातृभाषाहरुमा पठन पाठन भएको पाइएको छैन । २०४६ साल पूर्व मातृभाषा शिक्षामा चर्चा नभए पनि मैथिली र नेपाल भाषामा पठन पाठन भए । प्रजातन्त्र र लोकतन्त्र कालमा मातृभाषा शिक्षाको चर्चा बढी र काम कम भएको प्रतीत हुन्छ ।

## मातृभाषा (विषय र माध्यम, औपचारिक र अनौपचारिक) शिक्षाका समस्याहरू

मूलतः आधारभूत तहको विषयको रूपमा शिक्षामा मातृभाषा पठन पाठन कार्य प्रायः शून्यको अवस्थामा रहेको छ । पाठ्यपुस्तकको उपलब्धता नहुनुका साथै शिक्षक कोटाका अभावले यसको कार्यान्वयन हुन नसकिरहेको हो । माध्यम भाषाको रूपमा मातृभाषा शिक्षा अनौपचारिक रूपमा चलिरहेको छ तर सरकारले यसलाई औपचारिकता दिन सकिरहेको छैन । मातृभाषामा अनौपचारिक शिक्षाको कार्यान्वयन प्रायः शून्य जस्तै छ । यसका निम्न कारण रहेका छन् :

१ लाइन एजेन्सीका कर्मचारीले यस विषयलाई सकारात्मक रूपमा लिन नसक्नु ।

२ अनौपचारिक शिक्षाको केन्द्रदेखि मातहत तहका सम्पूर्ण अङ्गले मातृभाषामा अनौपचारिक शिक्षाका लागि योजना नबनाउने, चासो नदिने गरेको ।

३ पाठ्य सामग्री उलब्ध नहुनु ।

४ आफ्नो भाषामा पाठ्यपुस्तक बनेको कुरा सम्बन्धित समुदायलाई थाहा नहुनु आदि ।

औपचारिक शिक्षाको आधारभूत तह (कक्षा ६–८) र माध्यमिक शिक्षा तह (कक्षा ९-१२) मा मातृभाषी समुदायबाट पठन पाठनको माग गर्नुका साथै मातृभाषा पाठ्यक्रम मार्गदर्शन निर्देशिका बने पनि पाठ्य पुस्तक लेखन कार्य स्थानीय तहमा दिइएको बहानामा पाठ्यक्रम विकास केन्द्रले विषयका रूपमा पठन पाठन हुने आधारभूत तह (कक्षा ६-८) को मातृभाषाको पाठ्य पुस्तक लेखन रोकेको छ । यसरी मातृभाषाको पाठ्यपुस्तक लेखन स्थानीय तहमा दिनाले मातृभाषाहरु स्तरीकरण हुँदै जानुको बदलामा भाषिकीकरण हुँदै जाने भाषा स्तरीकरणको उल्टो यात्रामा हिँड्ने काम भएको छ । यस प्रकारको कार्यले भाषाहरु विभाजित हुँदै जाने अवस्था सिर्जना गरेको छ । मातृभाषाका आधारभूत तह कक्षा ६-८ को पाठ्यपुस्तकहरु नलेखिनाले माध्यमिक तह कक्षा ९-१२ मा समेत मातृभाषी विद्यार्थीले ऐच्छिक मातृभाषा विषय पढ्न पाएका छैनन् ।

जनशक्ति विकास केन्द्रले सञ्चालन गर्ने गरेको बहुभाषिक शिक्षक तालिम अन्य विषयको जस्तै व्यवस्थित हुन सकेको छैन भने माध्यमिक तहका शिक्षकका लागि मातृभाषा शिक्षा अध्यापन गर्न गराउन कुनै तालिमको व्यवस्था गरेको पाइएको छैन ।

मातृभाषी सामुदायले त्रिभुवन विश्वविद्यालय स्तरमा मातृभाषा विषयहरु पठनपाठनको माग गरे पनि आजसम्म सुनुवाइ भएको छैन । संस्कृत विश्वविद्यालयमा [illegible] र थारु भाषाको पाठ्यक्रम बने पनि विभाग निर्माण नभएको र शिक्षकको व्यवस्था नभएका कारण पठन पाठन हुन सकेको छैन ।

## शिक्षामा मातृभाषा सुधारका लागि केही सुझावहरू

शिक्षामा मातृभाषा अध्ययन अध्यापनमा देखिएका समस्याहरू समाधान गर्नका लागि निम्न प्रयत्नहरू गरिनु वाञ्छनीय हुन्छ ।

- संवैधानिक र कानुनी रूपमा मातृभाषा शिक्षालाई अरू व्यवस्थित गर्न संवैधानिक र कानुनी सुधार गरिनु पर्छ ।
- बहुभाषिक शिक्षा कार्यान्वयन निर्देशिकाको पूर्ण कार्यान्वयन हुनुपर्छ ।
- शिक्षामा मातृभाषा व्यवस्थित पठनपाठनका लागि शिक्षासँग सम्बन्धित तत्तत् लाइन एजेन्सीका तहमा मातृभाषा शिक्षा कार्यान्वयन र रेखदेख गर्ने शाखाहरूको व्यवस्था र सम्बन्धित भाषी कर्मचारीको व्यवस्था गरिनु पर्छ ।
- मातृभाषा शिक्षक कोटाको व्यवस्था गरिनु पर्छ ।
- मातृभाषाका पाठ्य पुस्तक अरू विषयका पाठ्य पुस्तकहरू सरह जनक शिक्षा सामग्री केन्द्रले नै छापी सबै पाठ्प पुस्तकहरू सँगै मातृभाषी विद्यार्थीहरूलाई वितरण गर्नु पर्ने व्यवस्था नेपाल सरकारले गर्नुपर्छ ।

## सन्दर्भ सामग्रीहरू


उच्च माध्यमिक विद्यालय पाठ्यक्रम कक्षा ११ (संसोधन सहित, २०६९), उच्च माध्यमिक शिक्षा परिषद्, पाठ्यक्रम तथा प्रशिक्षण महाशाखा, सानोठिमी, भक्तपुर ।

उच्च माध्यमिक विद्यालय पाठ्यक्रम कक्षा १२, (२०५६), उच्च माध्यमिक शिक्षा परिषद्, पाठ्यक्रम तथा प्रशिक्षण महाशाखा, सानोठिमी, भक्तपुर ।

कक्षा ९-१२ को पाठ्यक्रम संरचना, (२०६९), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

गुरूकुल शिक्षाको पाठ्यक्रम, प्राथमिक तह, कक्षा १-५, (२०६५), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

गोन्पा (गुम्बा) शिक्षाको पाठ्यक्रम, प्राथमिक तह, कक्षा १-५, (२०६५), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

तामाङ, अमृत योञ्जन, (२०६९), *बहुभाषिक शिक्षाका कुरा*, तामाङ समाज जापान, टोकियो ।

नेपालको अन्तरिम संविधान, (२०६३), नेपाल सरकार, कानुन, न्याय, संविधानसभा तथा संसदीय मामिला मन्त्रालय, कानुन किताब व्यवस्था समिति, काठमाडौं ।

नेपालको संविधान, (२०७२), नेपाल सरकार, कानुन, न्याय, संविधानसभा तथा संसदीय मामिला मन्त्रालय, काठमाडौं ।

नेपालमा विद्यालय शिक्षाका लागि राष्ट्रिय पाठ्यक्रम प्रारुप, (२०६३), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

बहुभाषिक शिक्षा कार्यान्वय निर्देशिका, (२०६६), नेपाल सरकार शिक्षा मन्त्रालय, केशरमहल, काठमाडौं ।

बाल सन्दर्भ सामग्री बालबोध-३६, केही धार्मिक तथा सांस्कृतिक सम्पादाहरु (केही नमुना कलाकृतिहरु), (२०५९), श्री ५ को सरकार, शिक्षा तथा खेलकुद मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

[illegible] शिक्षाको पाठ्यक्रम, आधारभूत तह, कक्षा १-५, (२०६८), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

मातृभाषाको नमुना पाठ्यक्रम तथा पाठ्यपुस्तक विकासका लागि मार्गदर्शन पुस्तिका, कक्षा ६-८, (२०६४), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

मातृभाषाको पाठ्यक्रम तथा पाठ्य पुस्तक विकासका लागि मार्गदर्शन पुस्तिका, आधारभूत तह (कक्षा ६-८) (परीक्षणका लागि), (२०७०), नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

माध्यमिक शिक्षा पाठ्यक्रम, (२०६८), कक्षा ९ र १० संस्कृत र वेदविद्याश्रम माध्यमिक विद्यालय, नेपाल सरकार, शिक्षा मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

[illegible] भाषा (मातृभाषा) को पाठ्यक्रम प्राथमिक तथा पाठ्यपुस्तक विकास निर्देशिका, (२०६०), श्री ५ को सरकार, शिक्षा तथा खेलकुद मन्त्रालय, पाठ्यक्रम विकास केन्द्र, सानोठिमी भक्तपुर ।

सील, अमान्डा, यादव, योगेन्द्र प्रसाद र कँडेल, सदानन्द (२०७३), *शिक्षणको माध्यम र शिक्षाका भाषाहरु नेपालमा शिक्षाका नीति, योजना र अभ्यासका लागि अबको बाटो*, ट्रान्सेन्ड भिजन नेपाल ।

# टिप्पणी

• प्रा. डा. माधवप्रसाद पोखरेल

मातृभाषामा संचार विचारणीय पक्ष हो । शिक्षाशास्त्रमा गहिरो अध्ययन रहेको तुम्याहाङ यो विषयको जानकार हुनुहुन्छ ।

वास्तवमा मातृभाषामा शिक्षालाई सरकारले मनन नगरेसम्म केही हुँदैन । संसारमा दुईपक्ष : वर्णनात्मक भाषाविज्ञानका प्रवर्तक ससुर हुन् । भाषाविज्ञानको नियमलाई लेनिनले परिवर्तन गरे । बदल्न सकिदैन भन्ने मान्यता तोडेर लेनिनले योजना ल्याए । मातृभाषाको वर्णनिर्धारण गराए । मातृभाषामा शिक्षा नीति १९२० तिर लागू गरे र लेनिनले १० वर्षमा यस्तो अवस्थामा पुऱ्याए । मध्यएसियामा भएको मातृभाषाको प्रयोगबाट ४ प्रतिशत साक्षर महिलाको अवस्थालाई७४ प्रतिशत पुऱ्याए । ससुरको सिद्धान्तमा ल्याइएको परिवर्तन हो । शासकले चाहेमा उत्थान हुनसक्छ भन्ने कुराको प्रमाण हो ।

हामीले पढ्ने समाजविज्ञान पश्चिमबाट आएको हो । समाजभाषाविज्ञान भनेको १९०५ मा जुन सोभियत संघको भाषा अवधारणा आएको थियो । तर स्तालिनको पालामा काम हुन सकेन ।

मातृभाषीहरूको विकासमा सरकारले मनैले लागेमा बदल्न सकिन्छ । तर त्यो सम्भावना नेपालमा छैन । २०४६ पछि राष्ट्रभाषा र राष्ट्रिय भाषा भनेर विभेद गरियो । भाषा सुझाव आयोग गठन भयो । आयोगले सुझाव पनि पेश गऱ्यो । तर कार्यान्वयन भएन । नौटङ्की र नाटक मात्र देखिए । टुँडिखेलमा गएर कुर्लिँदैमा केही विकास हुने वाला छैन ।

१९८९ पपुवा न्यु गिनीमा भाषाको विकास भएको छ । बहुभाषिक शिक्षाका नाममा आएका पैसा त्यतिकै सकिएको छ । बहुभाषिक शिक्षा के हो भन्ने कुरा सरकारलाई बुझाउन या देखाउन सकिएको छैन ।

मैले मेरो चेलालाई बुझाउन चाहे भने मिहिनेत गर्नुपर्छ । तर गुरूले पढाउन मन गरेनन् भने चेलाले सिक्दैनन् । शिक्षा विकास गर्ने नीति ल्याउने हो भने सम्भव छ । तर इमानदारिताको खाँचो छ । जबसम्म मूल भाँडो तात्दैन तबसम्म केही हुनसक्दैन ।

**भीमनारायण रेग्मी**

- संस्कृत विश्वविववद्यालयमा लिम्बु र थारू भाषाको जानकारी पाएँ ।
- राष्ट्रभाषा र राष्ट्रिय भाषा विषयमा कार्यपत्र प्रस्तुत गर्दा प्रा. वल्लभमणि दाहालले 'प्राचीन भाषा विश्वविद्यालय' बन्नुपर्छ भन्नु भएको थियो ।
- नेपाल संस्कृत विश्वविद्यालयमा अरू भाषा पढाउन ठाउँ हो कि होइन ?

**राजन जोशी (रास जोशी)**

- अमरजीले प्रस्तुत गर्नु भएकोमा शिक्षक सेवा आयोगमा मातृभाषा शिक्षक कोटाको व्यवस्था कसरी हुन्छ ?
- काठमाडौं उपत्यका, केन्द्रमा धेरैवटा सरकारी स्कुलमा नेपालभाषालाई स्थान दिएको छ । तर त्यहाँका प्रअहरूले असहयोग गरिरहेका छन् ।
- भाषा राख्दैमा आफ्नो पहुँच विस्तार नहुनसक्छ ।

**भीमलाल गौतम**

- शिक्षा ऐन आठौं संशोधनले विद्यालय संरचनामा परिवर्तन भएको छ । अब गर्ने मातृभाषा योजनाबारेमा बहस गर्दा सान्दर्भिक हुन्छ कि?

**शोभा भट्टराई**

- भाषा संरक्षण गर्दा भाषा छनोटको आधार के ? माइनुटको भाषा के छ ? जनसंख्याको आधार या के चाहि प्रभावकारी हुन्छ ? छनोट गर्दाको आधार के ?यो विषयमा छलफल गर्नु आवश्यक छ ।

**कृष्ण चालिसे**

- मातृभाषी समुदायको आवश्यकता कहिल्यै सोधिएन । माथि बसेर तल लाद्ने काम मात्र भयो ।

◆ अर्को सरकार सरकार भनिरहेका छौं । सरकार भनेको को हो ? गर्ने हामीले ग
हो । त्यस कारण हामी सबैले रचनात्मकतातर्फ दिन

**घिरेन बाहिङ**

◆ विगत १२-१३ वर्षबाट भाषा अभियानमा छु । पाठ्यक्रम विकास केन्द्र धाइयो
मातृभाषा बचाउन भनेर लागियो । तर कर्मचारीले लापरबाही गर्ने र बेवास्ता गर्न
गरेका छन् ।

◆ अल्पसंख्यक भाषाहरू बढी चाँडो लोप हुन्छ । हामीलाई चिन्ता छ ।

◆ हामी आफैं भाषा विकास गर्न चाहन्छौं । तर सरकारी निकायले बेवास्ता गर्छ ।

**कार्यपत्र प्रस्तोताको जवाफ**

◆ जवाफ दिनुपर्ने खासै बाँकी छैन । धेरै सुझावहरू आए । भाषाको लिखित विकास
क्रम जरूरी छ । त्यसको पहल हुन जरूरी छ ।

◆ नीति कार्यान्वयन किन हुँदैन । हामी भित्रबाट तयार छैनौं । लेखनमा त्रास छ
मानसिकताले त्यसो भएको हो । अहिले पनि त्रास छ । भाषा केवल कुनै जाति
लिङ्ग, समुदायको होइन । मुलुकको सम्पदा हो । भाषामा संस्कार, संस्कृति
परम्परा आदि जोडिएको छ । भाषा बाँच्यो भने हाम्रै सौन्दर्य बढ्छ । इन्द्रेणी
संस्कृतिका महत्व बढ्छ ।

◆ हाम्रो समयमा जो बाँचेका छौं । जो जो हौं । समयको यस्तो कुइनेटोमा छौं । वि
हामीले चाह्यौं भने धेरै काम सकारात्मक रूपमा हुनसक्छ ।

◆ दाहाल यज्ञनिधिले जतिसुकै राम्रो बोले पनि सर्वोच्चमा उनको रेकर्ड छ ।

◆ हामी सकारात्मक मात्र भइदियौं भने हुन्छ ।

# नेपालका मातृभाषाहरूको विकासमा सूचना प्रविधिको प्रयोगः स्थिति, औचित्य र चुनौती

• प्रा. डा. दानराज रेग्मी[२०]

## १ पृष्ठभूमि

नेपाल एक जटिल जाति भाषिक विविधता भएको देश हो। २०६८ सालमा लिइएको राष्ट्रिय जनगणनाले नेपाललाई १२३ मातृभाषा र १२५ जातजाति भएको मुलुकको रूपमा चिनाएको छ । नेपालमा समयोचित राष्ट्रिय भाषानीति र भाषाहरूको गहन अध्ययन अनुसन्धानको कमीका कारणले जटिल भाषिक परिस्थितिको व्यवस्थित र वैज्ञानिक आधारमा यथोचित सम्बोधन भइसकेको छैन । नेपालमा भाषाहरूको अध्ययन अनुसन्धानमा आधुनिक सूचना प्रविधि (कम्प्युटर, इन्टर्नेट, रेडियो, टेलिभिजन, टेलिफोन र विभिन्न सफ्टवेयर)को व्यापक प्रयोग हुन सकेको छैन । सूचना प्रविधिले हरेक व्यक्तिलाई व्यक्तिगत, सामाजिक, व्यावसायिक तथा शैक्षिक लक्ष्य प्राप्त गर्नका लागि सवल बनाउँछ । यति मात्र नभई प्रविधिको उचित प्रयोगले ज्ञानको खाडललाई [illegible] पुरा गर्न पनि मद्दत गर्दछ (ADB, 2009:1) ।[२१] यसको प्रयोगले सूचनाको [illegible]ार, सृजना, सम्प्रेषण, भण्डारन र व्यवस्थापनमा ठूलो सहयोग गर्दछ । शिक्षाको क्षेत्रमा सूचना प्रविधिको प्रयोग प्रभावकारी रूपमा हुनुका साथै यसको प्रभावको बारेमा

---

२० प्राध्यापक रेग्मी त्रि. वि. अन्तरगत भाषाविज्ञान केन्द्रीय विभाग, कीर्तिपुरका प्रमुख तथा नेपालको भाषिक सर्वेक्षणका निर्देशक हुनुहुन्छ।

२१ ADB (2009)ले सूचना(प्रविधिको सामर्थ्यका बारेमा भनेको छः : "ICT has the potential to "bridge the knowledge gap" in terms of improving quality of education, increasing the quantity of quality educational opportunities, making knowledge building possible through borderless and boundless accessibility to resources and people, and reaching populations in remote areas to satisfy their basic right to education."

विस्तृत मूल्याङ्कन पनि भएको पाइन्छ (Regmi, 2016) । नेपालमा आधुनिक सूचना प्रविधिको प्रयोगको इतिहास भने करिब १५ देखि २० वर्षको मात्र छ । विशेषतः अल्पसङ्ख्यक वक्ता भएका भाषाहरूको भाषा वैज्ञानिक पहिचान, संरक्षण, संवर्धन र विकास गर्नु नितान्त आवश्यकता छ । यसका साथै जातिभाषिक राष्ट्रिय पहिचानलाई सहजीकरण गरी राष्ट्रको जीवनका हरेक क्षेत्रमा सबै नेपालीलाई सहज रूपमा समावेश गराउनु पर्दछ । देशलाई शान्ति र विकासका बाटामा अग्रसर गराउनु लागि ती मातृभाषाको उत्थानमा अग्रसर हुने युवालाई सूचना प्रविधिको अधिकतम प्रयोग गर्न प्रोत्साहन गर्नु आजको आवश्यकता हो । तर प्रविधिको अप्राप्यता र अज्ञानताका कारणले गर्दा आजसम्म मातृभाषाको उत्थानमा सूचना प्रविधिलाई प्रभावकारी रूपमा प्रयोग गर्न सकिएको छैन । अर्कोतर्फ स्पष्ट राष्ट्रिय भाषानीतिको अभावका कारणले पनि मातृभाषीहरू आफ्नो भाषाको संरक्षण र विकासमा प्रभावकारी रूपमा लाग्न सकेका छैनन् । नेपालका धेरै मातृभाषाहरू सीमित परिवेशमा मात्र बोलिन्छन् । ती भाषाहरू क्रमशः नेपाली भाषातिर अपसरित हुँदै गई लोपोन्मुख अवस्थामा पुगेका छन् ।

यस कार्यपत्रमा नेपालका मातृभाषाहरूको स्थिति, मातृभाषाको विकासमा लागि गर्नुपर्ने केही प्रमुख कामहरू, मातृभाषाको उत्थानमा आधुनिक सूचना प्रविधिको प्रभाव, प्रयोगको सम्भावना, प्रविधिको प्रयोगमा रहेका समस्याहरु र ती समस्या समाधान गर्न अपनाउनु पर्ने केही रणनीतिहरूका बारेमा छोटकरीमा चर्चा गर्ने प्रयास गरिएको छ ।

## २. नेपालका मातृभाषाहरूको स्थिति

नेपाली, मैथिली, भोजपुरी, अवधी, नेवार जस्ता केही भाषाहरु बाहेक अरु भाषाहरूको स्थिति दयनीय नै छ । विभिन्न जनगणनाहरूमा नेपालमा मातृभाषाहरूको सङ्ख्यामा एकरूपता पाइँदैन । २००९ र ११ सालको जनगणनामा ४४ ओटा मातृभाषा रहेको तथ्याङ्क देखाइएकोमा पञ्चायती शासनकालको अघोषित भाषिक एकीकरणको नीति (language assimilative policy) अनुरूप सो सङ्ख्यामा लगभग क्रमशः ह्रास हुँदै २०१८ सालको जनगणनामा ३६, २०२८ सालको जनगणनामा १७ र २०३८ सालको जनगणनामा १८ मा झरेको पाइन्छ । प्रजातन्त्रको पुनरस्थापना पश्चात २०४८ सालमा गरिएको जनगणनामा पनि मातृभाषीहरु तथा सूचना सङ्कलन कर्ताको अनभिज्ञताका कारणले गर्दा जम्मा ३१ ओटा मातृभाषाहरु रहेको तथ्याङ्क सार्वजनिक गरियो । त्यसपछि मातृभाषीहरूमा आएको पहिचानको जागरणका कारणले २०५८ सालको जनगणनामा मातृभाषाहरूको सङ्ख्यामा एक्कासी वृद्धि भई ९२ पुग्यो । २०६३ सालको अन्तरिम संविधानले नेपालमा बोलिने सबै भाषाहरूलाई राष्ट्रभाषाको मान्यता दिएपछि

२०६८ सालको जनगणनामा सो सङ्ख्यामा अझ वृद्धि भएर १२३ पुगेकोछ ।[२२] एथ्नोलगले भने नेपालमा १२४ भाषा र भाषिकाहरु रहेको अनुमान गरेको छ (Eppele et al., 2012) । अझै पनि नेपालमा मातृभाषाको सङ्ख्या यकिनका साथ भन्न सकिएको अवस्था छैन । नेपालका १२३ भाषाहरु मूलतः चार भाषापरिवारका छन् । भारोपेली परिवारका भाषाहरुलाई करिब ८२.१% मानिसले बोल्दछन् भने चिन-तिब्बती भाषाहरु १७.३% ले बोलेको पाइन्छ । आग्नेसियाली र द्रबिड परिवारका भाषाहरु क्रमशः ०.२५ र ०.१५ ले मात्र बोलेको अवस्था छ । त्यसै गरी कुसुन्डा (एकल परिवार) भाषा बोल्नेको सङ्ख्या केवल २८ मात्र रहेको छ (रेग्मी, २०७०) ।

नेपालका करिब ८८ ओटा भाषा र भाषिकाहरुको समाज भाषावैज्ञानिक सर्वेक्षण सम्पन्न भइसकेको छ । त्यसै गरी २३ ओटा भाषामा अभिलेखीकरण, ३५ ओटामा शब्दकोश निर्माण, ५० ओटामा संक्षिप्त वा पूर्णव्याकरण, २५ ओटा भाषामा मातृभाषामा पाठ्यपुस्तक निर्माण र १० ओटा भाषामा केही सन्दर्भ सामग्रीको निर्माण र १० ओटामा शब्दसङ्ग्रह गरिएको छ । नेपाली, मैथिली, तिब्बती र शेर्पा, नेवार, लिम्बू, भोजपुरी, अवधी र लेप्चा बाहेक धेरै भाषाहरुमा लेख्य परम्परा छैन । गुरूङ र मगर जस्ता केही भाषिक समुदायहरु आफ्ना भाषामा लिपिको प्रस्ताव र विकास गर्ने क्रममा रहेका पाइन्छ । नेपालका जाति र मातृभाषाको सङ्ख्यामा पनि एकरुपता छैन । यहाँ १० जातिले एक साझा मातृभाषा बोल्ने गरेको पाइन्छ । त्यस्तै गरी ५३ जातिमा भने एक जाति एक मातृभाषा रहेको पाइन्छ । त्यसै गरी ५ जातिको एकभन्दा बढी मातृभाषाहरु रहेका पाइन्छ । नेपालमा करिब ४० जातिले स्थान अनुसार भिन्न मातृभाषा बोल्ने गरेको पाइन्छ (रेग्मी, २०७०) । झापामा राजवंसी, कञ्चनपुरमा रानाथारु, रसुवामा पश्चिमी तामाङ, धनकुटामा आठपहरे, पाल्पामा मगर ढुट, काठमाडौंमा नेवार, झापामा सन्थाली, सुनसरीमा थारु र उरावँ भाषाहरुमा मातृभाषामा आधारित आधारभूत शिक्षा दिने प्रयास गरेको पाइन्छ । नेपालका १२३ भाषाहरु मध्ये ३० ओटा प्रवल, ५१ ओटा सङ्कटापन्न, ११ ओटा अपसरणशील, ६ ओटा मृतप्राय, १ ओटा सुषुप्त र १ ओटा लोप अवस्था रहेको पाइन्छ । नेपालमा केवल ५३ ओटा (४३.०९५) भाषहरु मात्र सुरक्षित र बाँकी भाषाहरु अपसरणशील वा लोपोन्मुख अवस्थामा रहेकाछन् (रेग्मी, २०७०) ।

---

२२ यस जनगणानाले भाषाको वक्ताको सङ्ख्यामा निकै त्रुटी गरेको छ । एक दर्जन भन्दा बढी विदेशी माषालाई पनि नेपाली मातृभाषाको दर्जा दिएको छ।त्यतिमात्र नभई एउटै भाषा एक भन्दा बढी नाममा आएको छ।अर्को तर्फ आदिवासीका केही भाषाहरुले मातृभाषाको रुपमा पहिचान पाउन सकेका छैनन्। राईका विभिन्न छुट्टटछुट्टै भाषाहरु हुँदाहुँदै पनि राई भाषाको नाम पनि परेको छ। यो जनगणनालाई भाषाको अनुसन्धानको ठोस आधार मान्न सजिलै सकिँदैन।

## ३. मातृभाषाको विकासका लागि गर्नुपर्ने केही प्रमुख कामहरू

नेपालमा मातृभाषाहरूको संरक्षण, संवर्धन र विकास लागि केही निश्चित कामहरु गर्नुपर्दछ । भाषाविज्ञान केन्द्रीय विभागबाट संचालन गरिएको नेपालका भाषा र भाषिकाहरूको समाज भाषावैज्ञानिक सर्वेक्षणको कार्य लगभग अन्तिम अवस्थामा पुगेको छ । यसले नेपालको समाज भाषावैज्ञानिक अवस्थाको बारेमा विस्तृत चित्र कोरेको छ । अझै पनि नेपालमा भाषिक पहिचानका लागि के कति भाषा र तिनका भाषिकाहरु छ भन्ने कुराको विस्तृत स्थलगत भाषिक सर्वेक्षण भएको छैन । तोबा र अन्य (२००५ इ.) र रेग्मी (२०१७ इ.) ले केही प्रारम्भिक अध्ययन गरे पनि ती भाषा र भाषिकाहरूको जीवन्तताको स्थिति मूल्याङ्न वृहत् रूपमा  हुन सकेको छैन । लुइ र साइमन (२०१० इ.)ले विस्तारित श्रेणीकृत पुस्तान्तरण विघटन मापक्रम (Expanded Graded Intergenerational Disruption Scale)नामक भाषाहरूको जीवन्तताको स्थितिको मूल्याङ्कन गर्ने मोडेल प्रस्ताव गरेका छन् । यस मोडेल अनुसार सबै उमेर समूहका व्यक्तिले मौखिक रूपमा प्रयोग  गर्ने र समुदायका बालबालिकाले पहिलो भाषाको रूपमा सिक्ने भाषालाई प्रवल भाषा मानिएको छ । मौखिक रूपमा सबै उमेर समूहका व्यक्तिले प्रयोग गर्ने र तर बच्चा जन्माउने उमेरका केहीले मात्र आफ्ना वालवालिकालाई त्यो भाषा बोल्न सिकाउने भाषालाई संकटापन्न भाषाको दर्जा दिइएको छ । त्यसैगरी वच्चा जन्माउने उमेर समूहका मानिसहरु आफूहरु बीच  कुरा गर्नाका लागि भाषाको रामो ज्ञान भएको तर  कसैले पनि आफ्ना बालबालिकालाई त्यो  भाषा बोल्न नसिकाउने वा नसार्ने भाषालाई अपसरणशील भाषा मानिएको पाइन्छ। सक्रिय वक्ताको रूपमा खाली हजुरबाबु र हजुरआमाले मात्र प्रयोग गर्ने भाषालाई मरणासन्न, हजुरबाबु र हजुरआमा वा बुढापाकाले पनि ज्यादै कम मात्रामा प्रयोग गर्न अवसर प्राप्त गर्ने भाषालाई मृतप्राय र समुदायको जातीय पहिचानको रूपमा मात्र शेष रहेको भाषालाई सुषुप्त र प्रतिकात्मक उद्देश्यको लागि मात्र पनि पहिचान गुमाइ सकेको भाषालाई लोप भइसकेको भाषा मानिन्छ । नेपालका भाषाहरूको स्थितिगत योजना (status planning), संरचनागत योजना (corpus planning) र सम्प्राप्तिगत योजना (acquisition planning)का लागि यस मोडेलका आधारमा  भाषा र भाषिकाहरूको जीवन्तताको स्थितिको मूल्याङ्कन हुनु पर्दछ । यस बाहेक तुरुन्तै भाषिक पहिचानका लागि  भाषिक योजनाको खाका तयार गरी त्यसै अनुरूप कार्ययोजनाको निर्माण गर्नु प्रमुख काम हो । अतिलोपोन्मुख भाषाका लागि जातिभाषिक अभिलेखीकरण गर्नु, ती भाषाहरूको एक भाषिक, द्वय-भाषिक (मातृभाषा-नेपाली) र त्रैभाषिक (मातृभाषा-नेपाली-अङ्ग्रेजी)शब्दकोश निर्माण गर्नु आवश्यक छ । त्यसैगरी ती भाषाहरूको संक्षिप्त, वृहत्, सन्दर्भ र शैक्षणिक व्याकरण लेखन गर्नु पनि प्रमुख काममा पर्दछ । वर्णमालाको निर्धारण नभएका भाषाहरूको

वर्णमाला निर्धारण गर्नु र लेखन प्रणालीको विकास नभएका भाषाहरूका लागि लेखन प्रणालीको विकास गर्नु पनि  उत्तिकै प्रमुख काम हुन् । ती भाषाहरूमा आधारभूत तह र उच्च तहका लागि पाठ्यसामग्री र सन्दर्भ सामग्रीको निर्माण गरी मातृभाषामा शिक्षा दिनु त अति नै महत्वपूर्ण काम हो । यी सबै कामहरूलाई प्रभावकारी रूपमा कार्यान्वयन गर्नका लागि उपयुक्त प्रविधिको प्रयोग गर्नुपर्दछ। यी प्रमुख कामहरूलाई तलको आधारभूत रेडियल भेन ग्राफको सहायताले सङ्क्षिप्त रूपमा देखाइन्छ।



*ग्राफ १ : मातृभाषाको विकासका लागि गर्नुपर्ने प्रमुख कामहरू*

## ४. मातृभाषाको विकासमा सूचना प्रविधिको प्रयोग र त्यसको प्रभाव

आधुनिक सूचना प्रविधिको प्रयोग गरी भाषा-सञ्चार परियोजना अन्तर्गत नेपाली भाषाको पाठसङ्ग्रह निर्माण गरिएको छ । त्यसै गरी पुमा, छिन्ताङ र बराम भाषाहरूको जाति भाषिक अभिलेखीकरण कार्य संपन्न भएको छ । नेपालको भाषिक सर्वेक्षणमा पनि डेटाबेसको निर्माण गर्ने प्रयासका साथै वर्ड सर्भ (WordSurv) र कग (COG) जस्ता सफ्टवेयरको प्रयोग गरी भाषाहरूका शब्दगत र ध्वनिगत समानताको बारेमा अध्ययन गरिएको छ । नेपालका तराई क्षेत्रमा बोलिने भारोपेली परिवारका १४ ओटा भाषाहरूका २१० शब्दसूची सङ्कलन गरी वर्डसर्भ (WordSurv) र कग (COG) आधारमा शब्दगत र ध्वनिगत समानताको विश्लेषण गरिएको छ (Regmi, 2015) । टुलबक्सको प्रयोग गरी भुजेल, मगर काइके, धिमाल, कोई र दुमीजस्ता भाषामा व्याकरण लेखनका लागि पाठसङ्ग्रहको निर्माण गरिएको छ । जिरेल, ह्योल्मो, मगर, याक्खा, दुमी, खालिङ, नेवार, भुजेल, साम्पाङ, बराम, मेवाहाङ (मातृभाषा-नेपाली-अङ्ग्रेजी), मगर खाम र चेपाङ (मातृभाषा-अङ्ग्रेजी) जस्ता विभिन्न भाषाहरूको शब्दकोशको निर्माणमा टुलबक्सको प्रयोग गरिएको छ । त्यस्तै धिमालमा शब्दसंग्रह (मातृभाषा-नेपाली-अङ्ग्रेजी) र राजवंसीमा

चित्रात्मक शब्दसङ्ग्रहमा टुलबक्सको प्रयोग गरिएको छ। गुगल नेपाली अनुवाद (बोली-पाठ, पाठ-बोली, लिपि पहिचान), मेसिन अनुवाद (भाषाविज्ञान केन्द्रीय विभाग, त्रि.वि., काठमाडौ विश्वविद्यालय र मदन पुरस्कार गुठीको सहकार्यमा) र बोली-अनुवाद ( Language Technology Kendra द्वारा) गरिएको छ । यस्ता कार्यमा कार्यदक्षता र प्रभावकारिताको लागि प्रविधिको प्रयोग अनिवार्य नै रहेको छ ।

## ५ सूचना प्रविधि प्रयोगको सम्भावना

नेपालमा सूचना प्रविधिबारे स्पष्ट नीति आजका दिनसम्म पनि छैन । २०७२ सालको संविधानले हरेक भाषिक समुदायलाई मातृभाषाको प्रयोग, आधारभूत तहसम्म मातृभाषामा शिक्षाका साथै मातृभाषाको संरक्षण, संवर्धन र विकास गर्ने अधिकार दिएको छ । तर सूचना प्रविधि साक्षरताको हकलाई मौलिक हकको रूपमा भने परिभाषित गरिएको छैन । नेपालमा अङ्ग्रेजी, कोरियन, जापानी, जर्मन जस्ता भाषाको शिक्षणमा कम्प्युटर र इन्टर्नेटको प्रयोगले सकरात्मक प्रभाव पारेको पाइन्छ । तर आमशिक्षामा भने प्रविधिको प्रयोग शैशव अवस्थामा नै रहेको पाइन्छ । नेपालमा नेपाली भाषामा बाहेक अरूमा विद्युतीय प्रविधिको विरलै प्रयोग गरिएको अवस्था छ (Yadava, 2013) । नेपालमा मातृभाषा आधारित बहुभाषिक शिक्षामा प्रविधिको प्रयोग ज्यादै न्यून रहेको छ (Regmi and Regmi , 2016) । प्रविधिलाई बहुभाषिक शिक्षामा समाकलित (integrate) गराउने कार्य भने जटिल छ । औचित्य, प्रभावग्राह्यता, प्रभावकारिता, लचकता, सन्दर्भ (सचेतता र उद्देश्य अनुकूलता जस्ता कुराहरूलाई वास्तविक रूपमा बुझेर मात्र प्रविधिमा जानु उचित हुन्छ । प्रविधिको प्रयोगले सिकाइ उपलब्धी, जीवनपर्यन्त सिकाइका लागि चाहिने सीप, क्षमता र अवसर प्रदान गर्नुका साथै व्यावसायिक शिक्षा, कामका लागि तयारी वा रोजगारीका अवसरको सृजना र उत्पादकत्वमा वृद्धि गर्दछ ।

नेपाली इतर समुदायका बालबालिकालाई गुणस्तरीय शिक्षामा पहुँच, पाठ्यपुस्तक तथा सन्दर्भ सामाग्रीको निर्माण, शिक्षकको योग्यतामा अभिवृद्धी, गणितीय साक्षरता र जीवनका लागि नभइ नहुने सीपको विकास, लेखन प्रणालीको प्रस्ताव, व्याकरण र शब्दकोशको निर्माण र वक्ताको भाषाप्रतिको अभिवृत्तिमा परिवर्तन जस्ता कुरामा प्रविधिको प्रयोगले निकै ठूलो मद्दत गर्दछ (Swart,2016) । मातृभाषाको विकास गर्नु भनेको तिनीहरूलाई प्रयोगमा ल्याउनु हो । मातृभाषाको प्रयोगको एउटा प्रमुख क्षेत्र भनेको शिक्षा हो । नेपाली इतर समुदायका बालबालिकाहरूलाई आधारभूत तहदेखि नै नेपाली माध्यममा पढाइन्छ । उनीहरूका लागि नेपाली अपरिचित भाषा हो । नेपालीमा भनेका कुरा नबुझ्नाले कक्षा उत्तिर्ण गर्न नसकी दोहराउनु पर्ने र पढाइ बीचैमा छाड्ने जस्ता समस्या देखा परेका

छन् । गुणस्तरीय शिक्षामा उनीहरुको पहुँच देखिँदैन । प्राथमिक तहमा छात्राको भर्ना सङ्ख्या पनि निकै कम छ । डिजिटल विभेद (digital divide) कायम नै छ । यी कुराहरुको समाधानका लागि मातृभाषामा शिक्षाको व्यवस्था, साधन र स्रोतको उचित वितरण र कक्षा नियमितता र पढाइको सुचारूकतालाई प्रोत्साहन गर्नका लागि विभिन्न रणनीतिहरुको प्रयोग गर्नुपर्ने हुन्छ । यसका लागि प्रभावकारी योजनाको जरुरी पर्दछ । यसको निर्माणका लागि तथ्याङ्क सङ्कलन र विश्लेषणलाई व्यवस्थित गर्नका लागि प्रविधिको प्रयोग गर्नु पर्दछ । मातृभाषा शिक्षाका विद्वान्हरु कङ्गास र मोहन्ती (२००९) ले नेपालमा बहुभाषिक शिक्षाका लागि मातृभाषाका पाठ्यपुस्तकको ज्यादै कमी रहेको कुरा औंलाएका छन् (Kangas and Mohanty, 2009) । नेपालमा गुणस्तरीय पाठ्यपुस्तक तथा सन्दर्भ सामाग्रीहरु आवश्यक सङ्ख्यामा पाईंदैनन् । केही प्राप्त पाठ्यसामाग्रीहरु पनि स्थानीय आवश्यकता र सन्दर्भभन्दा बाहिरका देखिन्छन् । त्यसैले शिक्षक, विज्ञ र भाषिक समुदायको प्रत्यक्ष सहभागितामा स्थानीय आवश्यकता र सन्दर्भलाई समाहित गरेका गुणस्तरीय पाठ्यपुस्तक तथा सन्दर्भ सामाग्रीहरु आवश्यक सङ्ख्या उत्पादन गर्नु आवश्यक छ । ब्लुम (Bloom) जस्ता सफ्टवेयर प्रयोग गरेर यो समस्याको समाधान गर्न सकिन्छ । नेपालमा प्राथमिक तहमा मातृभाषाका साथै नेपाली र अङ्ग्रेजी भाषा पढाउने शिक्षकहरुमा एकातिर उचित शैक्षिक योग्यताको अभाव देखिन्छ भने अर्का तिर उनीहरुमा तालिम तथा विषयवस्तुको ज्ञान पनि कम छ । उनीहरुमा प्रभावकारी शिक्षण अभ्यास र प्रविधिबारे जानकारी र समूहमा मिलेर काम गर्ने सामर्थ्यको कमी देखिन्छ । उनीहरुलाई सघन तालिमको व्यवस्था र वृत्ति विकासका अवसर प्रदान गरिनुपर्दछ । उनीहरुलाई स्वनिर्देशित (self-guided) गुणस्तरीय सामाग्रीको उत्पादन गर्नमा संलग्न गराउनु पर्दछ । यसका साथै उनीहरुलाई सूचना (प्रविधिको व्यापक प्रयोगका बारेमा पनि जानकारी गराउनु आवश्यक छ । यसका लागि रेडियो, भिडियो, सिडी, अनलाइन, ओडिएल र मल्टिमिडियाको प्रयोग गरी शिक्षकहरुको क्षमताको अभिवृद्धि गर्न सकिन्छ । त्यसै गरी नेपाली भाषा इतरका समुदायका बालिकाहरुमा अशिक्षा व्याप्त छ । उनीहरुमा गणितीय ज्ञानका साथै जीवनका लागि नभइ नहुने ज्ञानको पनि कमी छ । यसका लागि प्राथमिकताका साथ साक्षरता, गणितीय तथा जीवनपयोगी ज्ञान तालिम प्राप्त शिक्षकहरुबाट दिनुपर्दछ । त्यस्ता शिक्षकहरुमा पढाइ र लेखाइका विभिन्न पक्षका साथै स्वनिर्देशित सामाग्रीहरुको बारेमा राम्रो ज्ञान हुनु आवश्यक छ । यसका लागि रेडियो, भिडियो, सिडी, अनलाइन र विभिन्न विद्युतीय साक्षरता सामाग्री र कार्यक्रमले प्रभावकारी रुपमा सहयोग गर्न सक्दछन् । नेपालका थुप्रै भाषाहरुमा लेखन प्रणालीको विकास गर्न सकिएको छैन । आजभोलि प्रस्ताव गरेका लेखन प्रणालीले पनि भाषाका ध्वनिहरुको राम्ररी प्रतिनिधित्व गर्न

सकेका छैनन् । अर्कोतिर देवनागरी लिपिलाई अनुकूलन गर्नेबारे पनि भाषिक समुदायहरु त्यति खुसी देखिँदैनन् । विशेषतः आदिवासी भाषिक समुदायका भाषाहरूलाई लेखन परम्परामा ल्याउनका लागि भाषावैज्ञानिक र सामाजिक पक्षहरूलाई समान रूपमा ध्यान दिई लेखन प्रणालीको विकास गर्नुपर्दछ । सके आफ्नै लेखन प्रणालीको विकास गर्ने, नसके अन्तरिम व्यवस्थाका लागि भए पनि देवनागरी लिपिलाई अत्यधिक अनुकूलन गरी प्रयोग गरिनुपर्छ । यसका लागि आजभोलि Graphite जस्ता सफ्टवेयरको विकास गरिएको छ । टुलबक्स (Toolbox), वोइसे (WeSay), फ्लेक्स (FLEx) जस्ता सफ्टवेयरको प्रयोगबाट मातृभाषामा शिक्षाका लागि आवश्यक पाठ्यपुस्तक र अन्य सन्दर्भ सामाग्रीहरूको निर्माणका लागि सन्दर्भसामाग्रीको रूपमा प्रयोग गर्न सकिने नेपालका विभिन्न भाषाहरूका व्याकरण र शब्दकोश थोरै समयमा प्रभावकारी रूपमा निर्माण गर्न सकिन्छ । यसका साथै यी प्रविधिको प्रयोग गरी शैक्षणिक व्याकरण, त्रैभाषिक शब्दकोश र चित्रात्मक शब्दकोशको निर्माण तुरुन्तै गर्न सकिन्छ । अत्याधुनिक प्रविधिको प्रयोग गरी लोपोन्मुख भाषाहरूको अभिलेखीकरणको काम गर्न सकिन्छ । रेडियो र टेलिभिजन कार्यक्रमका माध्यमबाट मातृभाषी र बेमातृभाषीहरूमा भाषाप्रति सकरात्मक सोचको विकास गर्न सकिन्छ । एकभाषीले अर्को भाषीलाई सम्मानका दृष्टिले हर्ने संस्कृतिको विकास गर्नुपर्दछ । यी सबै कुराको प्रभावकारी विकासमा प्रविधिले ठूलो भूमिका खेल्दछ । प्रविधि-साक्षरता (Information literacy) आधारभूत मानव अधिकार हो । आजको समस्या भनेको प्रविधिमा पहुँच नहुनु होइन, प्रविधिप्रतिको अज्ञानता वा अशिक्षा नै हो (ADB-2009:1)[२३] तल मातृभाषाका विकासका लागि प्रयोग गरिने केही बहुप्रचलित सफ्टवेयरका झलकका साथै कग र टुलबक्सका सहयताले गरिएका विश्लेषणका केही झलकहरु दिइएको छ।






२३ ADB(2009:1)ले भनेको छ: It (ICT) is a basic human right in the digital world... The digital divide is much more than a "technology access" divide; without the skills to use the technologies, an even greater divide emerges-the information literacy divide.






**अङ्गिका भाषाका शब्दगत समानता विश्लेषण (कगको आधारमा)**

| | OMNAGAR | CHHITHA | PANDITTOL | DARAHIYA | POKHARIYA |
|---|---|---|---|---|---|
| OMNAGAR | | [illegible] | [illegible] | [illegible] | 72 |
| CHHITHA | [illegible] | | [illegible] | [illegible] | 73 |
| PANDITTOL | [illegible] | [illegible] | | 78 | 75 |
| DARAHIYA | [illegible] | [illegible] | 78 | | 77 |
| POKHARIYA | 72 | 73 | 75 | 77 | |

**भुजेल भाषाको टुलबक्सका आधारमा गरिएको एक मूल प्रविष्टिको नमुना**

\lx lexical item दपाएमए

\pr pronunciation /dɘpaymɘy/

\psn POS in Devanagri स.क्रि.

\gn gloss in Nepali शोषण गर्नु

\ps POS in English vt.

\ge gloss in English exploit

## ६ आधुनिक सूचना प्रविधिको प्रयोगमा रहेका चुनौतीहरू

नेपालका मातृभाषाहरूको विकास गर्नका लागि आधुनिक सूचना प्रविधिको प्रयोग ...पर्ने कुरामा दुई मत हुन सक्दैन । तर यसको समयोचित र प्रभावकारी प्रयोग गर्नमा ... थुप्रै चुनौतीहरु रहेका छन् । बजेट अभावको कारणले नेपालजस्तो गरिब मुलुकमा ...को र विश्वसनीय प्रविधिको प्रयोग गर्न गाह्रो भएको छ । विश्वसनीय प्रविधिको प्रयोग नहुँदा गरेका कामहरु पनि प्रभावकारी हुन सक्दैनन् । नेपालको जस्तो सामाजिक तथा सांस्कृतिक विविधता र जटिलता भएको देशमा प्रविधि चयनमा पनि ठूलो चुनौती ...एका छ । यस्ता सामाजिक तथा सांस्कृतिक समस्याको निराकरणमा राज्यले ...त नीति निर्माण गर्नु आवश्यक छ । नेपाली जनतामा सूचना प्रविधिका बारेमा ...पक रूपमा अनभिज्ञाता नै रहेको छ । एकातिर आत्मविश्वास र जागरूकताको पनि ... भने अर्कोतर्फ परिवर्तन नचाहने अभिवृत्ति जस्ता मनोवैज्ञानिक समस्याहरु पनि ... रूपमा रहेका छन् । नेपाली समाजमा 'सबै जान्ने' प्रवृत्ति र जानेकाबाट सिक्न

नचाहने प्रवृत्ति वा आफ्नो समस्या पहिचान गर्न नसक्ने जस्ता समस्याहरूले पनि जरो गाडेको अवस्था छ । अर्को ठूलो समस्या भनेको भाषाको समस्या पनि हो । आजसम्म पनि नेपालमा अङ्ग्रेजीलाई हाउगुजीको रूपमा लिइन्छ । धेरै-थोरै मानिसहरु मात्र अङ्ग्रेजीमा प्रवीण रहेको पाइन्छ । प्रायः सबै प्रविधिको विकास अङ्ग्रेजी भाषामा नै गरिएकाले नेपालका आम मातृभाषीहरूका लागि ग्रहण गर्न गाह्रो भएको छ । नेपालमा प्रविधिलाई सहज रूपमा प्राप्त गर्न पनि गाह्रो छ । विद्युत र टेलिफोन सुविधा सबै ठाउँमा छैन । नेपालमा अर्को ठूलो समस्या भनेको जनशक्तिको अभाव पनि हो । मर्मत सभारमा जटिलता र तालिमको कमीले गर्दा लाखौं खर्च गरेर किनिएका प्रविधिका कुराहरु त्यसै थन्काएर राख्नु परेको अवस्था छ । नेपालमा नीतिगत समस्या पनि छ । आजसम्म पनि 'डिजिटल समुदाय र सूचना प्रविधि साक्षरताको हक' को व्यवस्था कानुनी रूपमा हुन सकेको छैन । प्रविधि प्रयोगका लागि न्यूनतम योग्यताको बारेमा पनि नेपालमा नीतिको अभाव छ।

## ७. प्रविधिको सम्मिलनका लागि आवश्यक रणनीतिहरू

नेपालले मातृभाषाको विकासमा प्रविधिको सम्मिलनका लागि केही आवश्यक रणनीतिहरु तुरुन्तै अपनाउनु पर्ने देखिन्छ । सम्बन्धित निकाय र सरकारबाट मातृभाषीहरूलाई प्रविधिमा पहुँचका लागि आर्थिक सहयोगको व्यवस्था हुनु पर्दछ । इन्टर्नेट पहुँचमा सरकारको तर्फबाट नीति र कानुनको निर्माण गरी सास्कृतिक भिन्नताले ल्याउने समस्याहरूको समाधान गर्नु पर्दछ । त्यसै गरी सूचना प्रविधि साक्षरता (Information literacy)को हकलाई सरकारले संवैधानिक रूपमा तुरुन्तै प्रत्याभूत गर्नु पर्दछ र डिजिटल समुदाय (Digital Community)को नीतिलाई सरकारले तुरुन्तै निर्माण गरी लागु गर्नु पर्दछ । प्रविधिको उचित प्रयोगका लागि सम्बन्धित निकायबाट तालिमको व्यवस्था हुनु पर्दछ । भएका कामलाई अनिवार्य रूपमा डिजिटल रूपमा लानुपर्ने नीति लागु गर्ने र गरेका कामको उचित समीक्षा र थप कामका लागि प्रोत्साहनको व्यवस्था हुनु पर्दछ । सरकारले प्रविधिबारे जानकारी स्थानीय भाषामा दिने व्यवस्था गर्नु पर्दछ । यसका साथै सहज प्राप्यताको सुनिश्चतता, नियमित विद्युत आपूर्ति र टेलिफोनको विकास, भाषामा काम गर्न न्यूनतम वाञ्छनीय योग्यताको नीति, अल्पसङ्ख्यक भाषिक समुदायका जागरूक सदस्यलाई विशेष तालिमको व्यवस्था जस्ता कामहरु तुरुन्तै गर्नु पर्दछ । मातृभाषी शिक्षक र विद्यार्थीलाई तालिमको व्यवस्था हुनु पर्दछ (Almalki and Williams, 2012) । सरकारले प्रविधिलाई नेपालका भाषाहरूको परिप्रेक्षमा स्थानीयकरण गर्ने दीर्घकालीन नीति लिनु आवश्यक पर्दछ ।

## ८ उपसंहार

यस कार्यपत्रमा नेपालको वर्तमान भाषिक परिप्रेक्षमा मातृभाषाको उत्थानमा आधुनिक सूचना प्रविधिको प्रभाव, प्रयोगको सम्भावना, समस्याहरु र ती समस्या समाधान गर्न अपनाउनु पर्ने केही रणनीतिहरूका बारे चर्चा गरियो । नेपालमा मातृभाषाहरूको विकास गर्नका लागि धेरै कामहरु गर्नुपर्ने अवस्था रहेको छ । त्यस मध्ये सूचना प्रविधिको अधिकतम प्रयोग पनि एक हो । प्रविधिको प्रयोगले मातृभाषाहरूको विकासका लागि गरिने कामहरूलाई सहज, कम खर्चिलो र गुणस्तरीय बनाउन मद्दत गर्दछ । तर पनि विभिन्न कारणले गर्दा प्रभावकारी रूपमा प्रविधिको प्रयोग हुन सकेको छैन । भाषाको अभिलेखीकरण, व्याकरण लेखन, परिमार्जन र सम्प्रेषण, शब्द सङ्कलन र व्यवस्थापन, अनुवाद र मातृभाषामा शिक्षा दिनका लागि आवश्यक पाठ्यसामग्रीको निर्माण जस्ता कुराहरूमा आधुनिक प्रविधिको प्रयोग गर्नु पर्दछ । सूचना प्रविधि साक्षरता (Information literacy)को हकलाई सरकारले संवैधानिक रूपमा तुरुन्तै मान्यता दिई डिजिटल समुदाय (Digital Community)को नीतिलाई सरकारले तुरुन्तै निर्माण गरी लागु गरेमा नेपालका लोपोन्मुख मातृभाषाहरूलाई सवल बनाउन सकिन्छ । जागरूक मातृभाषीहरूलाई उचित तालिम र प्रोत्साहन प्रदान गरी ती भाषाहरूको आधुनिक प्रविधिको प्रयोग गरी जातिभाषिक अभिलेखीकरण तुरुन्तै गर्नु पर्दछ । यसका लागि सबैले पुरातनवादी सोचमा परिवर्तन ल्याई सम्बन्धित सबै निकायहरु एकजुट भई प्रविधिको अधिकतम प्रयोग गरी मातृभाषाहरूको संरक्षण, सम्वर्धन र विकासमा लाग्नु पर्दछ ।

# सन्दर्भ सामग्री


रेग्मी, दानराज (२०७० वि.सं.) नेपालका भाषाहरूको सर्वेक्षण: स्थिति र चुनौती । २०७० साल आषाढ २५ मा (तदनुसार जुलाई १०, २०१३) शिक्षा मन्त्रालय र नेपाल प्रज्ञा-प्रतिष्ठानको संयुक्त आयोजनामा नेपालको भाषानीति विकाससम्बन्धी राष्ट्रिय कार्यशाला गोष्ठीमा प्रस्तुत गरेको कार्यपत्र ।

रेग्मी, दानराज (२०७० वि.सं.) नेपालको वर्तमान भाषिक अवस्था, गरिमा, मार्ग २०७०, अङ्क, ३७२ ।

Asian Development Bank (2009). *Good Practice in Information and Communication Technology for Education.* Mandaluyong City, Philippines: Asian Development Bank.

Almalki, Almalki and Neville Williams . 2012. A Strategy to Improve the Usage of ICT in the Kingdom of Saudi Arabia Primary School. *International Journal of Advanced Computer Science and Applications,* 3(10).

Central Bureau of Statistics. 2012. *National Population and Housing Census 2011: National Report.* Kathmandu: National Planning Commission.

Eppele, M. John, Paul Lewis, Dan Raj Regmi and Yogendra P. Yadava (eds.) 2012. *Ethnologue: Languages of Nepal*, Kathmandu: Central Department of Linguistics and SIL International.

Kangas, Tove Skutnabb and Ajit Mohanty (2009). *Policy and Strategy for MLE in Nepal.* A report submitted to Multilingual Education Program for All Non Nepali Speaking Students of Primary Schools of Nepal Ministry of Education Department of Education Inclusive Section Sanothimi Bhaktapur 4 14 March 2009.

Lewis, M. P. and Simons, G. F. 2010. Assessing Endangerment: Expanding FishmanÚs GIDS. *Revue Romaine de Linguistique* 55.103-120.

Regmi, Dan Raj. 2015. Exploring Relationships among the Major Indo-Aryan Languages of Tarai in Nepal. *Nepalese Linguistics* (Journal of the Linguistic Society of Nepal), Vol. 30, 2015.

Regmi, Dan Raj and Ambika Regmi. 2016. Role of Multilingual Education Planning and Policy [MEPP] for the Development of Indigenous Languages and Cultures in Nepal. A paper presented at the International Conference on Language Policy in Multicultural and Multilingual Settings, 8-11 February, 2016, The University of Mandalay, Mandalay, Myanmar.

Regmi, Dan Raj. 2016. Impact of ICT on the Mothertongue Based Education in the Developing Countries. A paper presented at the international conference organized by the International Mother Language Institute (IMLI), 22 February 2016, Dhaka, Bangladesh.

Swart, Patti. 2016. Main issues, Possible Solutions and Opportunities for ICTs. Global e-schools and communities initiatives. Retrived, 5 July, 2016.

Regmi, Dan Raj. 2017. Convalescing the Endangered Languages in Nepal: Policy, Practice and Challenges, *Gipan*, Vol.3.1, January, 2017.

Toba, Sueyoshi and Ingrid Toba and Novel Kishor Rai. 2005. *Diversity and Endangerment of Languages in Nepal.* Kathmandu: UNESCO, Organization, Kathmandu Office.

Yadava, Yogendra. P. 2013. MLE Policy and Practices in Nepal: An Appraisal. A paper presented at 4th International Conference on Language and Education: Multilingual Education for All in Asia and the Pacific-Policies, Practices and Processes, held in Bangkok, Thailand.

# टिप्पणी

● **सह प्रा. डा. बलराम प्रसाई**

प्रस्तुति सुन्दर र ज्ञानले भरिएको छ । कार्यपत्रमा सूचनाहरू प्रशस्त छन् । कामलाई सहज तुल्याउन प्रविधिको सहयोग चाहिन्छ ।शब्दकोश बनाउँदा टुल बक्स मात्रै चलाउने हो भने पनि फटाफट डाटा निकालेर दिन सकिन्छ ।

हामीले बराम भाषाको काम गर्दा हाई टेक्नोलोजीको प्रयोग गरेका थियौं । प्रविधिले काम छिटो गराउँछ तर प्रविधिको प्रयोग भन्दा गहन चिन्तन नै आवश्यक छ । कम्प्युटरलाई त सुत्रमात्र दिने हो । सुत्र दिँदा मात्र कम्प्युटरले काम गर्ने हो । किनभने कम्प्युटर भन्ने चिज अर्कै हो । मेसिन हो । कम्प्युटर आफैले केही गर्ने होइन, आफू अनुकुल बनाउने हो । हाम्रो समस्या चाहिँ के हो भने हामीलाई के चाहिएको हो भन्ने कुरा नै थाहा छैन । थाहा भयो भने त्यहीअनुकूलको प्रोग्रामिङ गर्ने हो । सूचना प्रविधि भाषाको विकासका लागि समेत भएको कुरालाई आत्मसात् गर्नुपर्ने हुन्छ ।

जनजाति प्रतिष्ठान र भाषाविज्ञान विभागबीच धेरै काम भएको छ । तर, व्यापक प्रचार प्रसार छैन । यही सूचना प्रविधिलाई पनि आफूलाई चाहिने मोडेलमा निर्माण गर्न, उपयोग गर्न सकिन्छ ।

कम्प्युटर प्रविधिविज्ञले तपाइँको आवश्यकता के हो भनेर सोध्दा समस्याबारे आफैलाई थाहा हुँदैन । गर्दै जाँदा आवश्यकताअनुसार परिवर्तन गर्न सकिन्छ । भाषाको विकासमा कम्प्युटर प्रविधिको प्रयोगबाट धेरै सहयोग लिन सकिन्छ । अहिले त प्रविधिको प्रयोग अपरिहार्य जस्तै भैसकेको छ ।

**भीमनारायण रेग्मी**

- यो पत्र लेख्ने बेलामा शिक्षा नीति, सूचना प्रविधि नीति र संस्कृति नीति हेरेर रेफर गरिदिनु भएको भए वेश हुने थियो । यहाँ प्रस्तुत धेरै विषय त्यसमा समावेश छन् ।

- बजारमा पाइएका केही चिजहरू, एसआईएलले सफ्टवेर निर्माण गरेको छ । आधारभूत कुरा सफ्टवेयरमा पठाउने चिज हामीसित छैन ।
- देवनागरी, नेवारीमा छ । लिम्बुमा युनिकोड प्लेट फर्म छन् ।
- विचार गरौं, नेपालका थुप्रै भाषा एउटै लिपिमा लेख्न सक्ने अवस्थामा साझा रूप विकास भए हामी सूचना प्रविधिमा अगाडि जान सक्छौं ।

**खगेन्द्र संगम**

- २०६८ को जनगणनाले मेवाहाङ जातिलाई भुल्यो । लिङ्खिम र साम भन्ने थरमा राखिन्छ । साम भन्नाले चोर मोरा भनेको हो । मेवाहाङको शब्दकोश छ । २०६५ सालमा प्रकाशित छ । अल्पसंख्यक मेवाहाङ । लोपोन्मुख भाषालाई पहिले अध्ययन हुनुपर्ने किन गर्नुभएन ? नेपाली भाषालाई आदिवासी जनजातिले हेला गरेका छैनौं ।

**डीबी आङबुङ लिम्बु**

- हामी एडीबीजस्तो संस्थालाई हामी बुझ्छौं, संसारलाई आफू अनुकुल बनाउने भन्ने हो । अरूलाई नियन्त्रणमा राख्ने गर्छ । हामी बिऊ बिजनविहीन अवस्थामा हुँदैछौं । हामीलाई यही टुलले हाम्रो मौलिकता नै हराउने होइन ?
- मानवशास्त्रमा पढ्दा विद्वानहरूको कुरा गर्छौं । भाषा, संस्कृति, संस्कार पढ्न पर्छ कि पर्दैन ? भुजेललाई अंग्रेजी रोज्ने कसले बनायो ? राज्यकै गल्ती हो । संघीयता माग्यौं

**सह प्रा. डा. दुबिनन्द ढकाल**

- भाषाको संख्या ? भन्यौं १२३, १२४, १४० । तर यी भाषालाई कहाँ कसरी राख्ने भन्ने व्याख्या छैन । केही भाषा छुटेका छन् । मनाङको भाषा । अर्को भाषिका फरक फरक सुचना छ । थारू एउटै भाषा मानियो । देउखुरी, राना _ । नुनन, सीबीएस, एथ्नोलगको समेत गरी १५५ पुग्छ ।

**धिरेन बाहिङ**

- हाम्रो कुनै पनि सुचना बाहिङ भाषाबाट राख्नु पर्छ भन्ने छ । केही फन्टबाट सामाजिक सन्जालमा फाल्न सक्ने अवस्था छैन ।
- अर्कोचाहि बच्चा कार्टुनले हिन्दी सिक्छन् ।

- नेपालमा प्रयोग गरिएका १३ लिपिहरू छन्
- देवनागरी लिपिमा खस-नेपाली लगायतका भाषाहरू
- रोङ लिपिमा लेप्चा भाषा
- किरात/सिरिजंगा लिपि लिम्बु लगायत अन्य किराती भाषाहरू
- सम्भोटा/उ छेन (तामयिक) शेर्पा तथा तामाङ भाषा
- रञ्जना नेपालभाषा (नेवार) लेखिन्छ । यसका अलावा नेवार समुदायमा प्रचलित लिपि, भुजिमोल, पाचुमोल, कुम्मोल, गोलमोल, लितुमोल, हिंमोल, क्वेंमोल आदि प्रचलनमा थियो । यिनै लिपिलाई नेवाःलिपिका रूपमा विकास गरिएको छ ।
- ओलचिकि लिपिमा सन्थाल भाषा
- खेमा लिपिमा गुरूङ भाषा
- मिथिलाक्षर लिपिमा मैथिली भाषा
- अक्खा लिपिमा मगर भाषा
- जैंःतिचा लिपिमा कौंइच (सुनुवार) भाषा
- कैथी लिपिमा मैथिली र भोजपुरी भाषा
- धिमाल भाषाको लिपि
- उर्दू लिपिमा उर्दू भाषाको लिपि
- दिलविक्रम आङदेम्बे
- हिमाली भाषालाई खिसी गर्दा थाक्से भोटे भन्छन् । आधिकारिक निकायबाट प्रकाशित शब्दकोश शिष्ट हुने । थाक्से भोटेको शब्दार्थ नेपाल प्रज्ञा प्रतिष्ठानको व्याख्या अपव्याख्या छ ।
- भोटिया शब्द हिमाली भेगमा कुनै जाति भन्दा पनि क्षेत्रका आधारमा भनिन्छ । त्यसलाई जाति भनिएको छ । यसो भनिनु हुन्न ।

**कार्यपत्र प्रस्तोताको जवाफ**

- टिप्पणीप्रति मेरो सहमति छ । सबै जति प्रकारका शब्द विकास भएका छन्, कति सहज छ वा छैन त्यो केलाउनु पर्छ । जे जति लेखेका छौं, डिजिटलमा राख्नु राम्रो कुरा हो ।
- वल्लभमणि दाहाल मेरो गुरू । उहाँका अर्धांगिनी डा. सुभद्रा सुब्बाले मगर सम्बन्धी थेसिस हेर्न दिनु भएन ।
- भाषा कहिले चाहिने भन्दा बढी संख्या भन्यौं । कुनै एउटै भाषालाई तीनवटा पनि बनाइएको छ । भाषाको जटिलताले जातीय जटिलता आउँछ ।
- म संघीयताको विरोधी होइन । म नेपाली भाषी हुँ । सिंहदरबारलाई चिर्न जरूरी छ ।
- सुचना अधिकार छ । सुचना साक्षरता अधिकार पनि लिन जरूरी छ ।
- आउँदा दिनमा सुचना प्रविधिलाई स्वीकार्य हुनुपर्छ । प्रयोग गर्न सक्नुपर्छ ।

## परिशिष्ट– १

# सहभागीहरूको नामावली

| क्र.सं. | नाम | संस्था |
| --- | --- | --- |
| १. | मा. राज्यमन्त्री कुन्ती शाही | संघीय मामिला तथा स्थानीय विकास मन्त्रालय |
| २. | चन्द्रबहादुर गुरूङ (उपाध्यक्ष) | आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान |
| ३. | गोविन्दलाल (सदस्यसचिव) | आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान |
| ४. | श्रवण मुकारूङ (प्राज्ञ) | नेपाल प्रज्ञाप्रतिष्ठान |
| ५. | माधव पोखरेल | त्रिभुवन विश्वविद्यालय |
| ६. | लोकबहादुर थापा मगर | पूर्व सदस्य सचिव, आजउरा |
| ७. | शारदा सापकोटा | त्रि.वि. |
| ८. | प्रतिमा थापा | त्रि.वि. |
| ९. | रोहिनी राई | त्रि.वि. |
| १०. | अनु भण्डारी | त्रि.वि |
| ११. | प्रणव भण्डारी | त्रि.वि |
| १२. | भीमलाल गौतम | त्रि.वि. |
| १३. | ओमकारेश्वर श्रेष्ठ | त्रि.वि. |
| १४. | सोम धिमाल | धिमाल जागरण विकास केन्द्र |
| १५. | खगेन्द्र सङ्ग्रम | मेवालाङ याखोम्मा |
| १६. | गणेशबहादुर गुरूङ | सम्पूर्ण तमू समाज |
| १७. | शक्तिराज राई | ल.आ.समिति |
| १८. | पवित्रा राना मगर | मगर सङ्घ के.का.स. |
| १९. | छिला राई | सिति मासिक पत्रिका |
| २०. | दिपिका राई | किरात कोयी/कोयु राई समाज |
| २१. | चेतकुमारी गुरूङ | गुरूङ महिला सङ्घ |

| | | |
|---|---|---|
| २२. | तेजमाया दुमी राई | दुमिकिरात राई |
| २३. | रेनुका बाहिङ | बाहिङ किरात मुलिखिम |
| २४. | अस्मिता राई | सितिमी मासिक पत्रिका |
| २५. | दलबहादुर लिम्बु | लिम्बुवान अध्ययन केन्द्र |
| २६. | धनबहादुर माझी | नेपाल माझी उत्थान सङ्घ |
| २७. | जयकुमार राई | किरात राई प्रज्ञा परिषद् |
| २८. | हरिबहादुर माझी | M.C.R.C. Depart |
| २९. | विष्णुभक्त नाछिरिङ | किरात राई नाछिरिङ समाज |
| ३०. | डा. अम्बिका रेग्मी | नेपालको भाषिक सैक्षण |
| ३१. | डा. लक्ष्मीराज पण्डित | त्रिवि |
| ३२. | डा. नेत्रमणि राई | SIL International |
| ३३. | प्रा.डा. दानराज रेग्मी | CDC, TU |
| ३४. | जीवनजित राई | सितिमी मासिक पत्रिका |
| ३५. | नैन सेताल्बु जेरो | किरात जेरो राङु समाज |
| ३६. | दीपक वान्तावा राई | किरात राई वान्तावा भाषा |
| ३७. | राजनलाल (रास) जोशी | नेपाल भाषा केन्द्रीय विभाग |
| ३८. | राम मुकारूङ | किरात राई लेखक संघ |
| ३९. | सीताकुमारी खालिङ | किरात खालिङ केन्द्रीय उत्थान सङ्घ |
| ४०. | भुपराज वाहिङ | वाहिङ किरात मुलुखिम |
| ४१. | धिरेन सुस्तोचा वाहिङ | वाहिङ किरात मुलुखिम |
| ४२. | चन्द्रसिंह कुलुङ | नेपाल किरात कुलुङ भाषासंस्कृति उत्थान सङ्घ |
| ४३. | टङ्क लोहोरूङ | लोहोरूङ समाज |
| ४४. | क्या. चित्र लोहोरूङ | लोहोरूङ समाज |
| ४५. | डा. कर्णाखर खतिवडा | भाषाविज्ञान केन्द्रीय विभाग |
| ४६. | डा. दुविनन्द ढकाल | भाषाविज्ञान केन्द्रीय विभाग |
| ४७. | तोयानाथ भट्टराई | पूर्व सहसचिव, संसद सचिवालय |
| ४८. | डा.बलराम प्रसाईं | भाषाविज्ञान के.वि. कीर्तिपुर |
| ४९. | भीमनारायण रेग्मी | भाषाविज्ञान के.वि. कीर्तिपुर |
| ५०. | सरिता पुमा राई | पत्रकार |
| ५१. | गणेशकुमार राई | K.R.W.A. |
| ५२. | सूर्यप्रसाद यादव | Linguistic Surrey of Nepal |
| ५३. | कुमार जेरो | Kirat Federation |

| | |
|---|---|
| ५४. सरिता राई | किरात पत्रकार सङ्घ |
| ५५. दिलविक्रम आङ्देम्बे | अनुसन्धानकर्मी |
| ५६. पदम राई | बुङ्वाखा मासिक |
| ५७. गड्डुलमान राई | कि.उ.आ.भ.तु.जा. संरक्षण |
| ५८. रिता राई | कि.रा.प.के. काठमाडौं |
| ५९. गणेश राई | कान्तिपुर दैनिक |
| ६०. केशव ढुँगा | भाषिक अभियान्ता |
| ६१. दीलिपकुमार बास्के | आ.ज.उ.रा. प्रतिष्ठान |
| ६२. रामजी कोङ्रेन | नेपाल आदिवासी याक्खा सङ्घ |
| ६३. बोदकुमार श्रेष्ठ | नेपाली सेना |
| ६४. रमेशकुमार शाही | स्था.वि.म. |
| ६५. गङ्गा मल्ल | P.S.O. |
| ६६. जेलियस योञ्जन | विद्यार्थी |
| ६७. जी.बी. योञ्जन | विद्यार्थी |
| ६८. कृष्णकुमार खम्बु | भाषिक अधिकारकर्मी |
| ६९. तिलक चाम्लिङ | गोरखापत्र |
| ७०. अमृत योञ्जन तामाङ | भाषाविद् |
| ७१. जयकुमार खालिङ राई | कि.खा. राई उ. सङ्घ |
| ७२. शान्ती कोङ्रेन | आ.ज.उ.रा. |
| ७३. कृष्ण पराजुली | CDL TU |
| ७४. निराजन राई | किरात राई लेखक संघ |
| ७५. बबिता तामाङ | Indigenous TV |
| ७६. देबकुमार सुनुवार | Indigenous TV |
| ७७. अर्जुनकुमार कुलुङ | Indigenous TV |
| ७८. कपिल कुलुङ | Indigenous TV |
| ७९. सुमन राई | Indigenous TV |
| ८०. खरीजङ राई | Indigenous TV |
| ८१. कैलाश राई | अनुसन्धानकर्मी |
| ८२. सरोज गुरूङ | मर्स्याङ्दी तमू सङ्घ |
| ८३. प्रतिज्ञा रेग्मी | त्रिवि |
| ८४. शङ्कर लिम्बू | लाहुर्निप |
| ८५. कृष्ण चालिसे | CDL TU |

| | | |
|---|---|---|
| ८६. | अजित धिमाल | धिमाल जागरण |
| ८७. | दिवाकरमान श्रेष्ठ | SIL Internation (TU) |
| ८८. | मिनबहादुर जिरेल | स्थानीय प्रशिक्षण केन्द्र |
| ८९. | बद्रीगोपाल श्रेष्ठ | स्थानीय विकास प्रशिक्षण केन्द्र |
| ९०. | मंजु राई | त्रिवि |
| ९१. | महेश राई | भाषिक अधिकारकर्मी |
| ९२. | डा. तारामणि राई | प्रमुख, प्राज्ञिक महाशाखा, आजउरा |
| ९३. | विमला गुरूङ | नासु, आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान |
| ९४. | नरेन्द्र लिम्बू | नासु, आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान |
| ९५. | सरीना गुरूङ | अधिकृत, आजउरा |
| ९६. | कृष्णकुमार दुलाल | चालक, आजउरा |
| ९७. | आसमति गुरूङ | कार्यालय सहयोगी, आजउरा |
| ९८. | निर्माण घलान | चालक, आजउरा |
| ९९. | कृष्ण दुलाल | चालक, आजउरा |
| १००. | भरत बस्नेत | चालक, आजउरा |

## उद्घाटन सत्रको विवरण

**सभाध्यक्ष** : चन्द्रबहादुर गुरूङ, उपाध्यक्ष, आजउराप्र

**प्रमुख अतिथि** : कुन्तीकुमारी शाही, राज्यमन्त्री, संघीय मामिला तथा स्थानीय विकास

**अतिथि** : प्राज्ञ श्रवण मुकारूङ, नेपाल प्रज्ञा-प्रतिष्ठान
प्रा.डा. दानराज रेग्मी, त्रिवि भाषाविज्ञान केन्द्रीय विभाग
कमल पौडेल, अध्यक्ष, नेपाल भाषाविज्ञान समाज
डा. बलराम प्रसाई, टिप्पणीकर्ता
जयकुमार राई, कुलपति, किरात राई प्रज्ञा परिषद्
डा. भक्त राई, अनुसन्धान केन्द्र, नेपाल
अमृत योन्जन तामाङ, कार्यपत्र प्रस्तोता
प्राज्ञ अमर तुम्याहाङ, कार्यपत्र प्रस्तोता

**स्वागत मन्तव्य** : सदस्यसचिव गोविन्दलाल माझी

**कार्यक्रम संचालन** : डा. तारामणि राई र सरिना गुरूङ

**कार्यक्रम संयोजन** : अनुसन्धान तथा प्राज्ञिक महाशाखा
(आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान)

परिशिष्ट– २

# कार्यक्रमका झलकहरू













